# गोरक्ष निखिल वाणी

आध्यात्मिक शक्ति अनुसन्धानमूलक मासिक

जेठ, २०६८

गुरू र शिष्य

जेठ महिनाको राशिफल

पानीबाट उपचार

आफ्नो हात आफै हेरौं

रहस्य तान्त्रोक्त शक्तिपातको

अजर, अमर व्यक्तित्व गुरु गोरखनाथ

अप्रिल २१ मा पूजन गर्दै

अप्रिल २१ तारीख

अप्रिल २१ को कार्यक्रममा नृत्य गर्दै

अप्रिल २१ को कार्यक्रममा तांत्रिक नृत्य गर्दै

अप्रिल २१ को कार्यक्रममा उपस्थित भक्तजन

मासिक हवन

मासिक हवन

पोखरा लेखनाथमा कार्यकर्ता भेटघाट

○ वर्ष १२ ○ अङ्क १० ○ जेठ २०६८ ○ पूर्णाङ्क १४२

# यस अंकभित्र

अजर, अमर व्यक्तित्व ४



## अन्य सामग्रीहरु



गुरु र शिष्य २४

पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं
*सिद्धाश्रम शक्ति केन्द्रद्वारा* **प्रकाशित**
मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

पत्रिकाको कार्यालय
बसुन्धरा, काठमाडौं, पो.ब.नं. १०५११
फोन: ०१-४३८९१५४
URL: gnv.org.np, Email: info@gnv.org.np

प्रकाशकको ठेगाना
**सिद्धाश्रम शक्ति केन्द्र**
बसुन्धरा, काठमाडौं
पो.ब.नं.१०५११, फोन: २१००१५३
ssk.org.np, info@ssk.org.np

मुद्रण
भेराइटी प्रिन्टर्स प्रा.लि.
कुलेश्वर, काठमाडौं ।

**इन्द्रं मित्रं वरुणमग्निमाहुरथो**
**दिव्यः स सुपर्णो गरुत्मन् ।**
**एकं सद्विप्रा बहुधा वदन्ति,**
**अग्नि यमं मातरिश्वानमाहुः ।।**

(ऋग्वेद १/१६४/४६)

**भावार्थ**: परमात्माका विभिन्न शक्तिहरुलाई नै अनेकौ देवताहरुको नामबाट पुकारिन्छन्। तर त्यो एक नै हो। यसैले गुण कर्मस्वभावअनुसार त्यस परमात्माको उपासना गर्नुपर्दछ।

**सन्देश**: परमपिता परमेश्वर सर्वत्र व्यापक हुनुहुन्छ। विशाल संसार, अनन्तकोटि ब्रह्माण्डको कणकणमा ईश्वरको सत्ता विराजमान छ। सर्वव्यापक परमेश्वरको अनन्त शक्ति छन् जसलाई विभिन्न मतावलम्बीहरु भिन्न भिन्न नामले पुकार्छन्। उहाँ नै इन्द्र, मित्र, वरुण, अग्नि, यम हुनुहुन्छ। उहाँलाई चाहे राम भनौ वा कृष्ण, दुर्गा भनौ वा काली, शिवशंकर भनौ वा अल्लाह अथवा गड। परमात्माका बेग्लाबेग्लै नामलाई लिएर झगडा गर्नु ठूलो मूर्खता हो। उहाँ अनेकानेक रुपमा सर्वत्र विद्यमान हुनुहुन्छ, हरेक समय हाम्रो साथमा हुनुहुन्छ, संसारको कुना कुनामा उहाँको सार्वभौमसत्ता छ। यस कुरालाई सदैव ध्यानमा राख्नु अत्यावश्यक छ। प्रभुको नाम र गुणको चिन्तन गर्दै रहौ।

## जानकारी

*सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, काठमाडौँमा रहेको छ। परमपूज्य सद्गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो। आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ। यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ। यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन्। यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ। त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन्। त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो। प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ। विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुर्‍याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ। यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ। साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ। साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ।*

## आफ्नै कुरा

मानवजीवनलाई पूर्णतामा लैजान सम्पूर्ण योगी, साधुसन्त, साधक आदि अगाडि बढिरहेको देखिन्छ। जीवनमा पूर्णता केवल सद्गुरुको कृपाले मात्र सम्भव छ। जीवनमा सद्गुरु प्राप्ति गर्नु आफैँमा अहोभाग्य हो, जीवनको ठूलो सफलता हो। त्यसैले सद्गुरु प्राप्तिमा जोड दिनुपर्दछ। समाजमा सच्चा सद्गुरुको प्राप्ति दुर्लभ मानिन्छ। हुन त समाजमा साधुसन्तको कुनै कमी नभएता पनि सद्गुरु प्राप्त गर्न धेरै गाह्रो छ। पूर्वजन्मका राम्रा कर्मले, पुण्यफलले यस जन्ममा सद्गुरु प्राप्त भएको हुन्छ। परब्रह्म परमात्माले यस जगतमा सद्गुरुको अभाव नहोस् भनेर विभिन्न कालखण्डमा, विभिन्न युगमा विभिन्न रुपबाट अवतरण हुने, प्रकट हुने गर्नुभएको हुन्छ।

यस जगतमा गुरुको अभाव नहोस् भनी अनन्तकोटि ब्रह्माण्डका मालिक महानाथ गुरु गोरक्षनाथ यस धरामा वैशाखी पूर्णिमामा गोरखास्थित गोरख गुफामा प्रकट हुनुभएको हो। उहाँको प्राकट्यसँगै सारा पृथ्वीवासीले गुरु गोरक्षनाथलाई गुरुरुपमा प्राप्त गर्ने सौभाग्य प्राप्त गरे। यसरी स्वयं भगवान् शिवले आफ्नो मूलस्वरुप श्री शिवगोरक्ष स्वरुपमा प्रकट हुनु भई यस जगतलाई गुरुविहीन हुनबाट बचाउनुभयो। गुरु गोरक्षनाथ, जो भगवान् शिवका १०८ अवतारहरुमा प्रमुख अवतार मानिनुहुन्छ, सम्पूर्ण योगी, महायोगी, नाथ, ऋषिमुनि, देवताहरुका पनि परमादरणीय हुनुहुन्छ । उहाँको दिव्यता, उच्चता आफैँमा अवर्णनीय छ।

यस्ता परमादरणीय परमपूज्य सद्गुरुदेव श्री शिवगोरक्षलाई गुरुरुपमा पाउनु हामी सबैका लागि परम सौभाग्य हो। उहाँ प्रकट हुनुभएको दिव्यतम् दिनलाई सिद्धाश्रम शक्ति केन्द्रले 'श्री शिवगोरक्ष प्रकट दिवस'को रुपमा मनाउँदै आइरहेको छ। भव्य शोभायात्रा, बाजागाजा र झाँकीसहित गोरख गुफामा पुग्ने, साथै उहाँको चरणकमलमा सवालाख रोट चढाउने कार्यक्रमको शुरुआत गरी पूजन, भजनकीर्तनका साथ यस दिवसलाई मनाउने प्रचलन रहँदै आएको छ। विगत सात वर्षसम्म सफलतापूर्वक रोट अर्पण गरेको यस केन्द्रले जेठ ३ देखि १३ गतेसम्म आठौं रोट महोत्सव भव्य एवं दिव्यरुपमा मनाउँदैछ। त्यसैले यहाँको सहभागिताका लागि पनि यस केन्द्र हार्दिक आह्वान गर्दछ।

यसपालिको अंकलाई 'गुरु गोरखनाथ विशेष'को रुपमा निकालेका छौं। उहाँको उच्चता, दिव्यता, महिमा, गरिमालाई लेखनीभित्र उतार्न सकिने विषय होइन। तैपनि उहाँको बारेमा अंशरुपमा केही जानकारी दिने प्रयास प्रयत्न गरेका छौं। साथै यसै अंकदेखि राशिफललगायतका स्तम्भहरु थप गरेका छौं।

अन्तमा, यस अंकमा भए गरेका गल्ती, कमी-कमजोरीहरुका लागि क्षमायाचना गर्दै आवश्यक सल्लाह, सुझावको अपेक्षा राख्दछौं।

अस्तु ।

*महोस्त्वं रुपं च मपर विचिराक्षै गुरुवदैः*
*श्रीयै दीर्घकाय विधुरम विदारै नव निधि ।*
*अतस्वा प्रीचार्य अथ प्रहर रुपै सद गुणै*
*गुंरौ दैवं श्रेयं निखिल हृदयेश्च महपरौ ।*

हे परम आराध्य गुरुदेव ! हजुरजस्तो युगपुरुष पहिलोपटक यस पृथ्वीमा अवतरित हुनुभएको छ जसको चरणको धूलो प्राप्त गर्न उच्चकोटिका योगीजन पनि व्यग्र रहन्छन् । हजुर पृथ्वीमा प्रत्यक्ष देव हुनुहुन्छ, जो चिन्त्यअचिन्त्य, शुद्धबुद्ध, आत्मस्वरूप एवं पूर्णतादायक हुनुहुन्छ । हजुर र गणपतिमा धेरै नै साम्यता छ । उहाँ गणपति अर्थात् गणहरूका अधिपति हुनुहुन्छ, हजुर साधकाधिपति एवं शिष्याधिपति हुनुहुन्छ । हजुर जीवनमा जुन प्रकारले गतिशील रहनुभएको छ, जस्तो प्रकारले हजुरले कार्य गर्नुभएको छ, त्यसको कुनै तुलना हुनै सक्दैन । ब्रह्माण्डको यस्तो कुनै स्थान छैन जहाँ हजुरको गमन निर्वाध गतिले नहोस् र हजुरको पहुँच नभएको होस् । हजुर सम्पूर्ण आदि विद्याका सिद्ध आचार्य हुनुहुन्छ, यसैले हजुर समस्त ब्रह्माण्डमा निर्वाध गतिबाट विचरण गर्न सक्षम हुनुहुन्छ । लेखनपूर्व सरस्वती, वाग्देवी तथा गणपतिलाई त म स्मरण गर्दछु नै, देवस्वरूप, ब्रह्माण्डस्वरूप हजुर 'निखिलेश्वर'लाई भक्तिभावले प्रणाम गर्दै सदैव आफ्नो रोम रोमबाट 'निखिलेश्वर' र 'गुरु' शब्दको उच्चारण गर्दै, पूर्णत्व, हजुरको भक्ति एवं सामीप्यता प्राप्त गर्न अभीप्सित छु ।

**(निखिलेश्वरानन्द स्तवन)**

*मोहं माजयितुं नगेन्द्रदुहितु, र्हर्तुं क्षमासङ्कटं,*
*धर्तुं योगधुरां परां प्रथयितुं विद्यां वृषं रक्षितुम् ।*
*कर्तुं लोकमशोकमुन्नमयितुं, मत्स्येन्द्रकीर्तिं भवान्,*
*प्राप्तो गामगजां वियोज्य नटराड्, गोरक्षनाथात्मना ॥*

हे नाथ ! हे नटराज !!
नगेन्द्रनन्दिनी पार्वतीलाई यस कुरामा गर्व थियो कि 'प्रमथनाथ महेश्वर मेरो अर्थात् मायाको वशमा हुनुहुन्छ, मायाभन्दा पर हुनुहुन्न ।' शैलजाको यस मोहलाई हटाउनका लागि, पृथ्वीका समस्त सङ्कटहरूलाई नष्ट गर्नका लागि, दुर्वह योगधुरालाई धारण गर्नका लागि, आत्मीय अक्षर ब्रह्मस्वरूपको प्रकाशिका परा विद्याको प्रचारका लागि, अभ्युदय र निश्रेयस सिद्धिको मूल साधन वृषरूप धर्मको रक्षा गर्नका लागि, सम्पूर्ण लोकहरूलाई शोकरहित बनाउनका लागि, धर्मपुत्र तथा शिष्य मत्स्येन्द्रनाथको कीर्तिलाई शिष्य भई संसारमा फैलाउनका लागि, हिमाद्रिकन्यालाई वियुक्त गरेर हे शिव ! हजुरले 'गोरक्षनाथ'को रूपमा मर्त्यलोकमा पदार्पण गर्नुभएको हो ।

**(गोरक्षकल्पद्रुम)**

# महायोगी गुरु गोरखनाथ

स्वानन्द विग्रह परमानन्दस्वरूप गुरु मत्स्येन्द्रनाथका शिष्य चिदानन्दायित योगविग्रह शिवगोरक्ष महायोगी गुरु गोरखनाथ भक्तवशमनरूप योगामृत प्रदान गर्नका लागि चारै युगमा विद्यमान रहेर प्राणीहरूलाई मोक्षपद-कैवल्यस्वरूपमा अवस्थित गर्दै रहनुहुन्छ । श्री गुरु गोरखनाथ नाथपंथका प्रवर्तक हुनुहुन्छ । उहाँले आफ्नो योगदर्शन र योगसिद्धान्तहरूबाट पूर्वीय संस्कृति र साहित्यलाई चीर समृद्ध गर्नुभयो । शास्त्रसम्मत योगपद्धतिको ज्ञानप्रकाशबाट जनचेतना जगाएर जनसमुदायलाई सत्य र शिवको महाज्ञानले समृद्ध र समलंकृत गर्नुभयो । यो नै उहाँको योगरसिकता हो ।

कल्पद्रुमतन्त्रअन्तर्गत गोरक्षस्तोत्रराजमा योगेश्वर भगवान् श्रीकृष्णले महायोगी गुरु गोरखनाथलाई प्रणाम गर्दै हार्दिक श्रद्धाभक्ति समर्पित गर्दै उहाँको महिमा गाउनुभएको छ ।

**निरन्जनो निराकारो निर्विकल्पो निरामयाः ।**
**अगम्योअगोचरोअलक्ष्यो गोरक्षः सिद्धवन्दितः ॥**
**समस्तरसभोक्ता यो, यः सदा भोगवर्जितः ।**
**सदा समरसो यश्च, श्री गोरक्ष नमोअस्तु ते ॥**
**हठयोगविधाता च, मत्स्यकीर्तिविवर्धनः ।**
**योगभिमंनसा गम्यः श्रीगोरक्ष नमोअस्तु ते ॥**
**सिद्धानान्च महासिद्धः ऋषीणां च ऋषीस्वरः ।**
**योगिनान्चैव योगीन्द्रः श्रीगोरक्ष नमोअस्तु ते ॥**
**विश्वतेजो विश्वरुपं विश्ववन्धः सदाशिवः ।**
**विश्वनामा विश्वनाथः श्रीगोरक्ष नमोअस्तु ते ॥**
**अनन्तलोकनाथश्च नाथनाथशिरोमणिः ।**
**सर्वनाथसमाराध्यः श्रीगोरक्ष नमोअस्तु ते ॥**
**शून्यानां च पर शून्यं परेषां परमेश्वरः ।**
**ध्यायतान्च परं धाम श्रीगोरक्ष नमोअस्तु ते ॥**

*(कल्पद्रुमतन्त्र–गोरक्षस्तोत्रराज)*

हे गोरक्ष (गोरखनाथ) ! हजुर निरंजन, निराकार, निर्विकल्प, निरामय, अगम्य, अगोचर, अलक्ष्य हुनुहुन्छ, सिद्ध हजुरको वन्दना गर्दछन्, हजुरलाई नमस्कार छ । हजुर समस्त रसहरूका भोक्ता हुनुहुन्छ तर पनि सदा भोगहरूबाट विरक्त हुनुहुन्छ । हजुर समरस हुनुहुन्छ, हजुरलाई नमस्कार छ । हजुर हठयोगका प्रवर्तक शिव

हुनुहुन्छ, आफ्ना गुरु मत्स्येन्द्रनाथको कीर्तिलाई बढाउने हुनुहुन्छ, योगीजन मनमा हजुरको ध्यान गर्दछन्, हजुरलाई नमस्कार छ । हजुर सिद्धहरूमा महासिद्ध, ऋषिहरूमा ऋषिश्वर, योगीहरूमा योगीन्द्र हुनुहुन्छ, हजुरलाई नमस्कार छ । हजुर विश्वको प्रकाशक हुनुहुन्छ, विश्वरूप हुनुहुन्छ, विश्वद्वारा वंद्य सदाशिव हुनुहुन्छ, हजुर विश्वनामधारी हुनुहुन्छ, विश्वनाथ हुनुहुन्छ, हजुरलाई नमस्कार छ । हजुर असङ्ख्य लोकहरूका स्वामी हुनुहुन्छ, नाथहरूका नाथशिरोमणि हुनुहुन्छ, समस्त नाथहरूबाट पूज्य (शिव) हुनुहुन्छ, हजुरलाई नमस्कार छ । हजुर शून्यमा पनि परमशून्य हुनुहुन्छ, परमेश्वरका परमेश्वर हुनुहुन्छ, ध्यानीहरूका ध्येय हुनुहुन्छ, हजुरलाई नमस्कार छ ।

गुरु गोरखनाथको अमरता र समय समयमा प्राकट्यको कुरा 'श्रीवल्लभदिग्विजय' ग्रन्थमा पनि उल्लेख छ । गोस्वामी यदुनाथले महाप्रभु वल्लभाचार्यको सम्बन्धमा 'श्रीवल्लभदिग्विजय' ग्रन्थको रचना गर्नुभएको छ । त्यसमा महाप्रभुको पश्चिम यात्राको सम्बन्धमा रैवतक पर्वतमा गोरक्षनाथजीको श्रीविग्रहदर्शनको कुरा उल्लेख छ जसबाट यो थाहा हुन्छ कि महायोगी गुरु गोरखनाथ जुनसुकै समय जहाँसुकै पनि सिद्धदेहमा प्रकट हुनुहुन्छ, उहाँ अमरकाय र अकाल हुनुहुन्छ ।

**'ततो रैवतोपरि गतास्तत्र गोरक्ष्यशिखराद्या गोरख्यशिष्याः प्रोचुः यदि यूयं सिद्धास्तर्हि वदत गोरख्य कुत्र तदा कृष्णा प्राह सर्वत्रा सौ । तेभ्यो गोरख्यकोटीस्ते प्रदर्श्च चलिताः ।'** (वल्लभदिग्विजय)

जोधपुराधीश्वर महाराजा मानसिंहले 'श्रीनाथतीर्थावली'मा उल्लेख गर्नुभएको छ– द्वापरयुगमा श्रीरुक्मिणी र श्रीकृष्णलाई उहाँहरूको विवाहको अवसरमा गुरु गोरखनाथले प्रत्यक्ष दर्शन दिएर आशीर्वाद प्रदान गर्नुभएको थियो ।

श्री रुक्मिणीजीको रूप–लावण्यबाट देवताहरू मोहित भई उहाँको कंकणबन्धन गर्न असमर्थ हुन पुगे। तब ऋषिजन तथा अरूले गोरक्षनाथजीको स्तुति गरे। स्तुतिबाट सन्तुष्ट भएर योगीन्द्र गोरक्षनाथजीले दर्शन दिनुभयो। उहाँबाट नै कंकणबन्धन सम्पन्न भयो। त्यसपश्चात् भगवान् कृष्ण र रुक्मिणीले परमभक्तिपूर्वक उहाँको स्तुति गर्नुभयो। स्तुतिबाट प्रसन्न भएर श्री गुरु गोरखनाथले श्रीकृष्ण र श्री रुक्मिणीलाई वर माग भनी भन्नुभयो। दुवैले प्रार्थना गर्नुभयो कि 'हे नाथ! हजुर यहीँ निवास गर्नुहोस्।'

**इतः पश्चात्तत्रदेशे प्रभासः क्षेत्रसत्तमम् ।**
**तत्र गोरक्षमठिका नाम धामास्ति पावनम् ॥**
**रुक्मिणीकृष्णयोस्तत्राभूत्पूरा पाणिपीडनम् ।**
**रुक्मिणीरुपलावण्यान्मोहिताः सकलाः सुराः ।**
**बभूवुः शक्तिरहितास्तस्याः कंकणाबन्धने ।**
**तदा देवाः सऋषयः प्रजग्मुर्मिलिताः परे ॥**
**गोरक्षनाथं राजन्तं गुप्तभावेन तत्र तम ।**
**स्तुवन्तः प्रार्थयामासु दर्शनं तस्य शूलिनः ॥**
**स्तुत्यायितष्टो योगीन्द्रस्तेम्यः सन्दर्शनम् ददौ ।**
**साधितं प्रार्थ्यतैस्तेन तस्याः कंकणबन्धनम् ॥**
**ततस्तुष्टुवतुर्नाथं रुक्मिणीदेवकीसुतौ ।**
**भक्त्या परमया सा तु प्रसिद्धा जगती तले ॥**
**ततोअति तुष्टो योगीन्द्रो वरदानीन्मुखोअभवत् ।**
**उवाच स वरं वृतं युवां यन्मनसीप्सितम् ॥**
**ततस्तौ ववृतुर्नाथ भवानत्रैव तिष्ठतु ।**
**तथास्त्विति वरं दत्वा नाथस्तत्रैव तस्थिवान् ॥**

*(श्रीनाथतीर्थावली ३१–३८)*

पश्चिम देश (रवैतक पर्वतभन्दा) मा क्षेत्रहरूमा श्रेष्ठ प्रभास क्षेत्र छ । त्यहाँ गोरक्षमठिका नामको परमधाम छ । त्यहीं रुक्मिणी र श्रीकृष्णको परिणय (विवाह) भएको थियो । श्री रुक्मिणीजीको रूपलावण्यबाट देवताहरू मोहित भई उहाँको कंकणबन्धन गर्न

असमर्थ हुन पुगे । तब ऋषिजन तथा अरूले गोरक्षनाथजीको स्तुति गरे । स्तुतिबाट सन्तुष्ट भएर योगीन्द्र गोरक्षनाथजीले दर्शन दिनुभयो । उहाँबाट नै कंकणबन्धन सम्पन्न भयो । त्यसपश्चात् भगवान् कृष्ण र रुक्मिणीले परमभक्तिपूर्वक उहाँको स्तुति गर्नुभयो । स्तुतिबाट प्रसन्न भएर श्री गुरु गोरखनाथले श्रीकृष्ण र श्रीरुक्मिणीलाई वर माग भनी भन्नुभयो । दुवैले प्रार्थना गर्नुभयो कि 'हे नाथ ! हजुर यहीँ निवास गर्नुहोस् ।' तब तथास्तु भनी नाथजी त्यहीं प्रतिष्ठित हुनुभयो ।

महायोगी गोरखनाथ देश, कालभन्दा पर योगपुरुष हुनुहुन्छ, उहाँको अस्तित्व सार्वदेशिक छ, सार्वकालिक छ । सत्य, त्रेता, द्वापर तथा कलि चारै युगमा उहाँको प्रसिद्धि अक्षुण्ण रहेको छ ।

सन्त कबीरको बडो मार्मिक उक्ति छ–

**काँमाणि अंग बिरकत भया, रत भया हरि नाहिं ।**
**साषी गोरखनाथ ज्यूँ, अमर भए कलि माहि ॥**

महायोगी गुरु गोरखनाथको जीवनसँग सम्बन्धित प्राय: सम्पूर्ण आख्यान तथा तत्सम्बन्धी अनेकानेक तथ्यहरूको मौलिक तात्पर्य यो हो कि उहाँ शिवस्वरूप हुनुहुन्छ, अयोनिज र अमर हुनुहुन्छ । उहाँ कायासिद्ध योगेश्वर हुनुहुन्छ । साक्षात् भगवान् शिवले महाकालयोगशास्त्रमा भन्नुभएको छ– मैले नै योगमार्ग प्रचारका लागि गोरक्षरूप धारण गरेको हुँ ।

**अहमेवास्मि गोरक्षो मद्रूपं तन्निबोधत ।**
**योगमार्गप्रचाराय मया रुपमिदं धृतम् ॥**

नेपाली कवि चक्रपाणिले शिव गोरक्षको ध्यान गर्दै अत्यन्त मार्मिकताका साथ भन्नुभएको छ–

**भजे श्रीगोरक्षं भुवि सकलसिद्धयेकभवनं**
**विरंचिश्रीवत्सिस्मरहरमहो विग्रहधरम् ।**
**धरापुत्रं लोकोद्धरणधिषणध्यासिते तनुं**
**महासामर्थ्याब्धिं भव लधिपारी भवधियम् ॥**
**विराजत्सिद्धौघप्रणतचरणां चण्डभ्जगो**
**परिष्टिादासीनंभसितनिचयोद्‌भासितरुचिम् ।**
**स्फुरज्जयोत्सनाचंचत्स्फटिकगिरिशोभाकररुचिं**
**विराजन्तमं पोनायतविपुलभव्याकृतिरुचा ॥**
**महारण्यभ्राजद्वटाविटपिमूलावनितल**
**प्रदीप्यदरत्नौघस्फरितमणिमन्चासनगतम् ।**
**महाश्वेतच्छत्राधरतलगमद्वैतहृदयं**
**समाधायासीनं परममहिमनिब्रह्मणि विभुम् ॥**

हे गोरक्षनाथ ! म हजुरको ध्यान गर्दछु जो समस्त सिद्धिहरूका एकमात्र परमाश्रय हुनुहुन्छ, जो बह्मा, विष्णु र शिवको रूपमा शोभित हुनुहुन्छ, जो पृथ्वीभित्र कन्दरामा तपमा तत्पर हुनाका कारण धरापुत्र कहलिनुहुन्छ, जो लोकको उद्धारका लागि अनेक रूपहरूमा अभिव्यक्त हुनुहुन्छ, जो परमशक्तिबाट युक्त हुनुहुन्छ, जो भवसागरबाट उतार्ने हुनुहुन्छ, जो मेघमालामय प्रचण्ड भुजगहरूमाथि सिद्धासनमा विराजमान हुनुहुन्छ, योगशक्तिले देदीप्यमान सिद्धहरूको समूह जसको चरणमा प्रणत छन्, जसको चन्द्रकलोपम गात्रमा अखण्ड विभूति शोभित छ, मानौं शरदपूर्णिमाको रातमा स्फटिक पर्वत कैलाश नै विभ्राजित भएको होस्, जसको मुखमण्डल प्रकाण्ड भव्य तेजोमण्डलबाट समलंकृत छ, म हजुरको यस्तो स्वरूपको ध्यान गर्दछु । जो विशाल वनस्थलीको मध्यमा वटवृक्षको मूलको प्रतिष्ठित वेदीमा दिव्य रत्नहरू जडित स्फटिकमणिको भव्य आसनमा विराजमान हुनुहुन्छ, जसमाथि विशाल छत्र शोभित छ, जो परममहिमामयी अद्वैतानन्दस्वरूप ब्रह्म समाधिमा लीन हुनुहुन्छ, यस्ता गोरक्षनाथ विभु (गुरु) को म ध्यान गर्दछु ।

'गोरखबानी' मा संग्रहित 'महादेवगोरखगुष्टि' रचनामा भगवान् शिवले श्री गोरक्षनाथलाई 'परमयोगसम्प्राप्त योगी'को सम्बोधनबाट अलङ्कृत गर्नुभएको छ । तत्त्वज्ञानको उपदेश दिँदै उपयुक्त रचनामा भनिएको छ–

**आत्मा परमात्मा भवति । जोगेस्वर जीव एकं भवति । परम सून्य भाव स्थिति । पारब्रह्म भवे लीनं । सत्यं सत्यं च वदाम्यहं । तत्वग्यान श्रीशंभूनाथ अकथ कथितं सुनो हो गोरष अवधूतं परमजोग संप्रापितं जोगी ।**

महायोगी गुरु गोरखनाथको व्यक्तित्वदर्शन साक्षात् नाथयोगको स्वरूपदर्शन हो । नाथसम्प्रदायगत परम्परा तथा अनुश्रुतिअनुसार अभिनवशिव गोरखनाथजीलाई चारै युगमा विद्यमान भनिएको छ । यसप्रकार उहाँको देह

सिद्ध अर्थात् अमर हुनु युक्तिसंगत देखिन्छ । लेखक ब्रिग्सले आफ्नो पुस्तक 'गोरखनाथ एण्ड द कानफट्टा योगिज्'मा पनि यस कुराको उल्लेख गरेका छन् कि गुरु गोरखनाथ सत्ययुगमा पंजाबमा प्रकट हुनुभएको थियो । त्रेतायुगमा गोरखपुर, द्वापरयुगमा द्वारिका तथा कलियुगमा उहाँको प्राकट्य सौराष्ट्रमा काठियाबाडको गोरखमढी स्थानमा भयो । यसको तात्पर्य हो कि गुरु गोरखनाथ अमर हुनुहुन्छ तथा चारैयुगलाई आफ्नो योगसिद्धिबाट कृतार्थ गर्नुभएको छ । उपर्युक्त स्थलहरू उहाँको तपःस्थली हो, समाधि होइन । उक्त पुस्तकमा उल्लिखित एक प्रसंग यस्तो पनि छ– जब भगवान् विष्णु कमलमा प्रकट हुनुभयो, त्यसबेला गोरक्षनाथ पातालमा तपस्या गरिरहनु भएको थियो । चारैतिर पानी नै पानी भएकोले सृष्टिकार्य कसरी गर्ने भन्ने ठूलो चिन्ता श्रीविष्णुलाई भयो । तब सृष्टिकार्यका लागि श्री गोरक्षनाथले आफ्नो धुनीबाट विभूति दिनुभयो, सृष्टिकार्य सहज भयो ।

फैजुल्लारचित बंगाली काव्य 'गोरख विजय'मा गुरु गोरक्षनाथको उत्पत्तिबारे एउटा कथा यसप्रकार रहेको छ । यसमा गुरु गोरखनाथ अयोनिजस्वरूपबाट प्रकट हुनुभएको उल्लेख छ । यसमा भनिएको छ– भगवान् शिवको नाभिबाट मत्स्येन्द्रनाथ, हाडबाट हाडिपा, कानबाट कानपा (कृष्णपाद) र जटा (ललाट) बाट गोरक्षनाथको उत्पत्ति भयो ।

**नाभि ते जन्मिल मीन गुरु मच्छन्दर**
**साक्षाते सिद्धारवेश धरे कलेवर ।**
**हाड़इते हाड़िफा जन्मिया निकलिल,**
**सर्वांग सिद्धारवेश ताइते आछिला ।**
**कर्ण हइते जन्मिल कानफा जुगाई**
**अति खरतर हइल सिधाई ।**
**जटा भेद निकालिल जति गोरखनाथ ।**

*(गोरखविजय)*

महायोगी गोरखनाथको उत्पत्ति प्रसंगमा अन्य धेरै जनश्रुतिहरू छन् । 'गोरक्ष सहस्रनाम' (नेपालको दरबार पुस्तकालयमा उपलब्ध) मा उल्लेख भएअनुसार गुरु गोरखनाथ दक्षिण दिशातर्फ बड़व नामको

**बाबाले आफ्नो झोलीबाट विभूति निकाली महिलालाई दिँदै भन्नुभयो, "चिन्ता नगर, यो विभूति खानू, भगवान् शिवको कृपाले छिट्टै नै सुसंस्कारित पुत्रको जन्म हुनेछ।" यति वरदान दिई योगी मत्स्येन्द्रनाथ बाटो लाग्नुभयो।**

देशमा महामन्त्रको प्रसादबाट प्रकट हुनुभएको थियो । महायोगीको उत्पत्ति प्रसंगमा एक प्रसिद्ध जनश्रुति रहेको छ। तर उक्त जनश्रुतिमा उत्पत्ति स्थान भने भिन्नभिन्न उल्लेख छ । कतै हाल पाकिस्तानमा पर्ने रावलपिण्डी उल्लेख छ, कतै भारतको अयोध्यानजिक भगवती सरयूको किनारनजिकैको जयश्री अथवा जायस नामक स्थान उल्लेख छ। कतै गोदावरी नदीको किनारमा चन्द्रागिरी नामक स्थान उल्लेख छ । जनश्रुति यसप्रकार छ–

भीक्षाटनको क्रममा एकपटक योगी मत्स्येन्द्रनाथले एउटा घरमा पुगेर अलख निरंजनको उच्चारण गर्नुभयो । कुनै बाबा भीक्षा माग्न आएको सङ्केत प्राप्त गरी घरभित्रबाट एउटी महिला भीक्षासहित बाहिर निस्किइन् । मत्स्येन्द्रनाथले महिलाको अनुहारमा चिन्ता देख्नुभयो । भीक्षा लिने क्रममा उहाँले भन्नुभयो– "छोरी, तिमीलाई के भएको छ ? के चिन्ता छ र उदास देखिन्छौ ?"

गहभरी आँसु बनाउँदै ती महिलाले विवाह भएको धेरै वर्ष बित्दा पनि आफूले आमा बन्ने सौभाग्य नपाएको, छिमेकीहरूले आफूलाई बाँझी आइमाई भनी अपहेलित र पीडित गर्ने गरेको यथार्थता बाबासमक्ष राखिन् ।

दया गरी बाबाले आफ्नो झोलीबाट विभूति निकाली महिलालाई दिँदै भन्नुभयो– "चिन्ता नगर, यो विभूति खानू, भगवान् शिवको कृपाले छिट्टै नै सुसंस्कारित पुत्रको जन्म हुनेछ ।" यस्तो वरदान दिई योगी मत्स्येन्द्रनाथ बाटो लाग्नुभयो । महिलाले उक्त विभूति खानको लागि सोचेकी मात्र के थिइन्, बाबासँगको संवाद सुनिरहेकी एउटी छिमेकी महिलालाई इर्ष्या उत्पन्न हुन गयो । उक्त छिमेकीले तत्कालै बनावटी शंका गर्दै भनिन्– "यस्तो भीख मागेर हिँड्ने जोगीले दिएको विभूति खाएर पनि कहीँ बच्चा हुन्छ ? यस्तो हुने भए त आज यो संसारमा कुनै पनि स्त्री बाँझी हुने थिएनन् । बच्चा त भगवान्को देन हो, भगवान्को कृपाले मात्र सम्भव हुन्छ । त्यो जोगी हेर्दै फटाहा लाग्दछ । त्यसले पक्कै तिमीलाई लठ्याई लुट्ने विचार गरेजस्तो छ ।" यस कुराबाट महिलालाई उक्त विभूतिप्रति अविश्वास तथा डर पैदा भयो । त्यसैले त्यसलाई नजिकै रहेको मलखादमा लगेर फ्याँकिदिइन् ।

समय बित्दै गयो । यस घटनाको १२ वर्षपछि योगी मत्स्येन्द्रनाथ पुन: तिनै महिलाको घरमा घुम्दै पुग्नुभयो । बाबाले भीक्षा लिनुपूर्व विभूतिको प्रभावले जन्मेको बालकको बारेमा महिलालाई सोध्नुभयो । महिलाले बाबालाई चिनिहालिन् अनि डराउँदै आफूले छिमेकीको कुरा सुनी उक्त विभूति फालिदिएको कुरा बताइन् । बाबाले विभूति फालेको ठाउँमा लैजान भन्नुभयो । त्यस मलखाद नजिक पुगेपछि बाबाले जोडसँग 'अलख निरञ्जन'को आवाज दिनुभयो । त्यस दिव्य आवाजसँगै उतिखेरै एक दिव्य अत्यन्त सुन्दर गौरवर्णयुक्त तेजस्वी बालक निस्की बाबानजिक जानुभयो । यस्तो दृश्य देखी ती महिला

**गुरु गोरखनाथको पादुका (नेपालको पुरानो निशाना छापमा)**

आश्चर्य र विस्मयका साथ प्रायश्चित गर्दै रुन कराउन लागिन् । बाबा त्यस बालकलाई लिई त्यहाँबाट आफ्नो बाटो लाग्नुभयो । योगीराज मत्स्येन्द्रनाथले त्यस बालकको नाम गोरखनाथ राख्नुभयो र गुरुभक्त ती बालकलाई आफ्नो प्रिय शिष्य बनाई योगमन्त्रको दीक्षा दिनुभयो ।

यद्यपि शिवगोरक्ष (गोरखनाथ) नै श्रीनाथ हुनुहुन्छ, उहाँलाई गुरु बनाउने आवश्यकता थिएन तर लोककल्याणका लागि तथा गुरु-शिष्य परम्परालाई जीवन्तता दिन उहाँले योगीन्द्र मत्स्येन्द्रनाथलाई आफ्नो पथपदर्शक बनाएर योगज्ञान प्राप्त गर्नुभयो । गोरखवाणीमा उहाँले उल्लेख गर्नुभएको छ–

**अवधू ईश्वर हमारे चेला भणीजै, मछींद्र बोलिये नाती ।**
**निगुरी पिरथी परलै जाती ताथै हम उल्टी थापना थापी ॥**

*(गोरखवाणी– सबदी १४४)*

गुरु गोरखनाथले गिरिनार, ज्वालादेवी तथा नेपालमा धेरै समय तपस्या गर्नुभयो । उहाँले सत्ययुगमा झेलम नदीको तटमा गोरखटिल्लामा तपस्या गर्नुभयो । त्रेतायुगमा भगवती इरावतीको तटमा गोरखपुरमा तपस्या गर्नुभयो । द्वापरयुगमा जूनागढको प्रभास पट्टननजिकै गोरखमण्डीमा तप गर्नुभयो । कलियुगमा पेशावरको गोरखहट्टीमा तपस्या गर्नुभयो । नेपाल, भारत, तिब्बत, पाकिस्तान, अफगानिस्तानलगायतका देशहरूका धेरै ठाउँमा उहाँको तपोऊर्जा अहिले पनि व्याप्त छ ।

नेपालमा गुरु गोरखनाथ शिवगोरक्षको रूपमा पूज्य हुनुहुन्छ । 'आदर्श योगी' नामक पुस्तकमा अक्षयकुमारले नेपालको इतिहासलाई आधार बनाई प्रचलित कथाअनुसार चौथौँ शताब्दीको अन्तिम समयतिर नेपालका बौद्ध राजा महीन्द्रदेवलाई पदच्यूत गरी गुरु गोरखनाथले आफ्ना शिष्य/सेवक वसन्तदेवलाई सिंहासनमा विराजमान गराइदिएबाट गुरु गोरखनाथले चौथौँ शताब्दीमा नै कार्य गर्नुभएको प्रमाण भेटिन्छ । नेपालको इतिहासमा हेर्दा राजा नरेन्द्रदेवको पालामा गुरु गोरखनाथमाथि अनादार हुँदा १२ वर्षसम्म नागको आसन जमाई तपस्या गर्नुभएको कथा छ । राजा नरेन्द्रदेवको बारेमा स्पष्ट तिथिमिति नभए पनि यो घटना चौथौँदेखि आठौँ शताब्दीमा भएको हुन सक्ने अनुमान लगाउने थुप्रै प्रमाण छन् । नेपालकै इतिहासमा हेर्दा द्रव्य शाह (वि.सं. १६१६-१६२६) लाई गुरु गोरखनाथले १७ औँ शताब्दीको शुरुतिर आशीर्वाद दिई गोरखाको राजा बनाउनुभएको घटना उल्लेख छ । द्रव्य शाहपछिको चौथा राजा राम शाहलाई १७ औँ शताब्दीको अन्ततिर गुरु गोरखनाथले आशीर्वाद दिनुभएको ऐतिहासिक प्रमाण भेटिन्छ । नेपालकै इतिहासमा द्रव्य शाहपछिका ११ औँ पुस्ताका राजा पृथ्वीनारायण शाहलाई अठारौँ शताब्दीमा आशीर्वाद दिनुभएको घटना उल्लेखनीय छ । नेपालको इतिहासमा छैटौँ शताब्दीमा नाथ सम्प्रदायको विकास भएको संकेत पाइन्छ । शकसंवत् ४५५ र वि.सं. ५९० को भस्मेश्वर अभिलेखमा 'नाथेश्वर' उल्लेख गरिएको छ । त्यस्तै शकसंवत् ४६९ अर्थात् वि.सं. ६०४ रामदेवको पालाको पशुपति मृगस्थली शिवलिङ्ग अभिलेखमा पनि

**ब्रिग्सले आफ्नो पुस्तक 'गोरखनाथ एण्ड द कानफट्टा योगिज्' मा पनि यस कुराको उल्लेख गरिएको छ कि गुरु गोरखनाथ सत्ययुगमा पंजाबमा प्रकट हुनुभएको थियो । त्रेतायुगमा गोरखपुर, द्वापरयुगमा द्वारिका तथा कलियुगमा उहाँको प्राकट्य सौराष्ट्रमा काठियाबाडको गोरखमढी स्थानमा भयो ।**

**उहाँ शिवस्वरूप हुनुहुन्छ, अयोनिज र अमर हुनुहुन्छ । उहाँ कायासिद्ध योगेश्वर हुनुहुन्छ । साक्षात् भगवान् शिवले महाकालयोगशास्त्रमा भन्नुभएको छ– मैले नै योग मार्ग प्रचारका लागि गोरक्षरूप धारण गरेको हुँ ।**

**नेपालको सिक्कामा श्री श्री श्री गोरखनाथ**

'नाथेश्वर'को उल्लेख गरिएको छ । मृगस्थली गुरु गोरखनाथको तपस्थली भएको र यस्तो शब्दको प्रयोगले गुरु गोरखनाथले त्यसबेला नै आफ्नो लीला देखाउनुभएको प्रष्ट हुन आउँछ । जयस्थिति मल्लको ने.सं. ४९९ (वि.सं.१४३६) को ताम्रपत्रमा 'देव गोरक्ष' उल्लेख भएको पाइन्छ। त्यस्तै नेपालसंवत् ५११ (वि.सं. १४४८) फर्पिङ अभिलेखमा 'गोरक्ष पादुकाभ्यां नमः' उल्लेख भएबाट पन्ध्रौं शताब्दीमा नै गुरु गोरखनाथको प्रभाव परिसकेको बोध हुन्छ ।

नेपालको गोरखा राज्य पनि गुरु गोरखनाथको नामबाट नै रहेको उल्लेख पाइन्छ। नेपालमा उहाँको उच्च आदर सम्मान हुने, उहाँलाई पूज्यदेव, राष्ट्रगुरु मान्ने, प्रत्येक कार्य गुरु गोरखनाथलाई सम्झेर मात्र गर्ने र नेपाली पैसामा पनि 'गोरष' लेख्ने परम्परा थियो । यसबाट पनि उहाँको कति व्यापकरूपमा प्रसिद्धि थियो भन्ने तथ्य प्रमाणित हुन्छ। अठारौं शताब्दीको अन्त्यतिर जन्मनुभएका पृथ्वीनारायण शाहलाई बूढा योगीको स्वरूपमा उपस्थित भई आशीर्वाद दिनुभएको, दही खान दिनुभएको कुरा नेपालको इतिहासमा स्वर्णाक्षरले लेखिएको छ। राजा द्रव्य शाहलाई गोरक्षाधीश भनेर सम्बोधन गरिनु, त्यस्तै अन्य राजाहरूलाई पनि गरिनुबाट गुरु गोरक्षको प्रभावको बारेमा उल्लेख गर्न असम्भव नै देखिन्छ ।

हालसम्म पनि नेपालको मुद्रामा गुरु गोरखनाथको नाम अंकित भएको पाइन्छ । नेपालको निशाना छापमा गुरु गोरखनाथको पादुका समेत राखिएको थियो । नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी गुरु गोरखनाथकै कृपा, आशीर्वादले नेपालीहरू विश्वमा वीर गोर्खालीको नामबाट गर्व गर्छन् । 'जय गोरख' भनी चिच्याउँदै अंग्रेजहरूलाई एउटा खुकुरीको भरमा परास्त गर्नु गुरु गोरखनाथकै कृपाको परिणाम हो भन्ने कुरामा कुनै सन्देह छैन ।

जय गुरुदेव !

# श्री गोरक्ष स्तवन

आत्माखलु विश्वमूलम् ॐ कृण्वन्तो विश्वमार्यम् ।
गोरक्ष बालं गुरुशिष्यपालं शेषहिमालं शशिखण्डभालम् ।
कालस्य कालं जितजन्मजालं वन्दे जटालं जगदाब्जनालम् ॥

॥१॥
गोरक्षनाथ भवरूप भवाब्धिपोत,
भक्तार्तिनाशन विभो करुणैकमूर्ते ।
त्वत्पाद-पद्म-मकरन्द-मधुव्रतोऽहं,
तापं, मदीयमनसो हर देव सद्यः ॥

॥२॥
गोरक्षनाथ मयि चेत् करुणातवेदृक्,
दीनस्त्वदीयचरणौं शरणं प्रपद्ये ।
नश्येदवश्यमथमानसवेदना में,
सिद्धिं ब्रजेन्निखिलब्रह्मविधिर्हि लोके ॥

॥३॥
गोरक्षनाथ-रजसा चरणस्थितेन,
पूतं शिरो भवति भक्तजनस्य नूनम् ।
त्वद्दर्शनं हरति तस्य समस्तचिन्तां,
त्वत्सेवनं हरति पाप-पिशाच-पुञ्जम् ॥

॥४॥
हे नाथ ! मामपि विलोकय दीनबन्धो,
सन्ताप-तप्त-हृदयं कृपणं क्षणेऽस्मिन् ।
पादानेते शिरसि मे वरदात्म-हस्तं,
कामं निधेहि गुरुदेव ! भवानुकूलः ॥

॥५॥
दोषकरोऽस्मि भगवन्नुकम्पनीयः
निर्दोषता न सुलभा जगतीतलेऽस्मिन् ।
दोषकरेऽपि विमलद्युतिसंयुतेऽपि,
किं लाञ्छनं मनुजदृष्टिपथं न याति ॥

॥६॥
आक्रम्यते जगति नैकविधैर्हि रोगै,
भोगी जनो विततभोग-विमूढचेताः ।
गोरक्षपाद-सरसीरुह-पूजनन्तु,
व्याधीर्हिनस्ति सकलान् खलु भोगमूलान् ॥

॥७॥
बद्धोऽस्मि देव भव-मोह-समूह-जाले,
मोच्यस्त्वया सदयमार्तिहरेण तूर्णम् ।
देया च मे शुभमतिः सततं ययाऽहं,
त्वत्पाद-पद्म-युगलं विमलं भजेयम् ॥

॥८॥
गोरक्षपत्तनमिदं प्रथितं पृथिव्यां,
तेपे तपः सततमत्र भवान् मुनीन्द्रः ।
योगस्य मार्गमुपदिश्य जनान् कृतार्थान्,
चक्रे भृशं सकललोक-शुभाभिलाषी ॥

# गोरखकृपा र कार्य सफलता

पृथ्वीनारायण शाह अंजुली थापेर बसेका थिए । गुरु गोरखनाथ मुखले ओकलेर उनको अंजुलीभरि दही खन्याउँदै हुनुहुन्थ्यो ।

–'खाऊ ।'

आदेश सुनेर पृथ्वीनारायण एकछिन अलमलिए । खानुको सट्टा उनले त्यसलाई घिनाएर फालिदिए । दही पृथ्वीनारायणको पाउभरि पोखियो । पृथ्वीनारायणलाई वाक्‌सिद्धिको अनुग्रह गर्न तम्सिनुभएका गुरु गोरखनाथले उनलाई भन्नुभयो, 'खाएको भए तिम्रो वाक् सिद्धि हुने थियो । ठीकै छ, तिम्रा पाउले जहाँ जहाँ टेक्नेछ, ती सबै तिम्रा अधीनमा आउनेछन् ।' आशीर्वाद दिँदै भन्नुभएको गुरु गोरखनाथको उक्त वचन सत्य भयो । पृथ्वीनारायणले छरिएर रहेको नेपालको एकीकरण गरे ।

पृथ्वीनारायणलाई कसैले राजनीतिक दुराग्रहवश नमानून्, त्यो भिन्नै कुरा हो । तर उनले केही त यस्ता कार्य गरेका थिए होलान्, केही त तपस्या थुपारेका थिए होलान्, गुरु गोरखनाथलाई प्रिय लाग्ने, उहाँको प्रसन्नता वृद्धि हुने केही त पुण्य गरेका थिए होलान्, भलै त्यो यस जन्ममा नभई आवागमनको कुनै कालखण्डमा गरेका थिए होलान् । हुन सक्छ उनले राज्यकालमा नै गरेका थिए । जेसुकै भए पनि गुरु गोरखनाथको अनुग्रहको पात्र बन्न त पृथ्वीनारायणले केही त गरेकै हुनुपर्छ । के गरेका थिए कसैलाई पनि थाहा छैन गुरु गोरखनाथका अतिरिक्त ।

तर हामीलाई भने थाहा छ हामीले अहिले के गरिरहेका छौँ भनेर । हामीलाई थाहा छ– हामी परमपूज्य सद्‌गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरान्द महाराजको महान् योजनालाई मूर्तरूप दिन विभिन्न गुरुकार्यमा लागिरहेका छौँ । सिद्धाश्रम शक्ति केन्द्रबाट आयोजना हुने विभिन्न आध्यात्मिक गतिविधिमा भाग लिएर, लिन लगाएर उहाँहरूको युग निर्माणका लागि जुटिरहेका छौँ, आउने सुनौलो भविष्यका लागि खटिरहेका छौँ ।

हामी गुरु गोरखनाथको कृपा पाउनका लागि आफूमा पात्रता निर्माण गर्दैछौँ, आफूमा अनुग्रह शक्तिका लागि चाहिने आवश्यक तत्त्व जुटाइरहेका छौँ– गुरुकार्यबाट, भक्तिबाट, श्रद्धाबाट, निष्ठाबाट । हामी त सलल बगेर छिनभरमै गुरुकार्य गर्ने जमर्को गर्छौं, छिनभरमै युगनिर्माणका लागि भनेर होमिन्छौँ । त्यसैले त आज सिद्धाश्रम शक्ति केन्द्रले आध्यात्मिक गतिविधिहरूलाई ऐतिहासिक रूप दिन सकिरहेको छ, अद्वितीयरूपमा सम्पन्न गर्न सकिरहेको छ ।

यसो भन्दा अलि अहं देखिएजस्तो लाग्न सक्छ । तर यो अहं नभएर गौरव हो, सौभाग्य हो किनभने सिद्धाश्रम शक्ति केन्द्रले जहिले पनि आफ्ना आराध्य सद्‌गुरुदेवहरूको छत्रछायाँमा बसेर, उहाँहरूको निर्देशनमा रहेर कार्यक्रमहरू सम्पन्न गर्दै आइरहेकाले सम्पूर्ण कार्यको सफलतामा यसले उनै सद्‌गुरुहरूलाई देख्ने गरेको छ । पृथ्वीनारायणले एकीकरणको श्रेय गुरु गोरखनाथलाई दिए दिएनन्, त्यो अज्ञात छ । नदिएका भए पृथ्वीनारायणभन्दा हामी अलिकति उपल्ला छौँ भनेर ठानेमा आपत्ति हुनेछैन किनकि सिद्धाश्रम शक्ति केन्द्रले

आयोजना गर्ने आध्यात्मिक अनुष्ठान होस् वा सामाजिक कार्य, सांगठनिक संरचनाको विकास होस् वा सबैको कल्याण, निर्माण, विकास, उन्नतिप्रगतिमा हामी उनै आराध्य सद्गुरुदेवहरू श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजलाई सर्वत्र देख्ने गर्छौं ।

सिद्धाश्रमका समस्त गुरु सेवकसेविका साधकसाधिकाहरूले आफूलाई निमित्त मात्रै ठानेर विशाल अनुष्ठानमा होमिने समय फेरि आएको छ- आठौं सवालाख रोट महोत्सवको रूपमा । सवालाख रोट महोत्सव योग हो खण्डित आत्माहरूको मिलनको रूपमा । सवालाख रोट महोत्सव योग हो विखण्डित र अशान्त आत्माहरूको शान्तिका लागि । यो एउटा योग हो असफलता र शत्रुताको बीचमा सफलता र मित्रताको । त्यसैले योग प्रचारका लागि गुरु गोरखनाथ फेरि रूप धरेर आउनुभएको छ तपाईं हामीबीच आठौं सवालाख रोट महोत्सव बनेर । यस रोट महोत्सवमा फेरि एकपटक आफूलाई केवल उनै आराध्य गुरु गोरखनाथको उपकरण सम्झेर, निरामय भावले लाग्नु आवश्यक छ किनभने 'यस्तै यस्तै' महाअनुष्ठानहरू, कार्यक्रमहरू, गुरु गोरखनाथको अनुग्रह पाउन पृथ्वीनारायणले गरेका थिए होलान् । हामी पनि भविष्यका गोरखकृपाका अधिकारी बन्न जाँदैछौं यस्तैयस्तै महाअनुष्ठानहरूमा निमित्त बनेर ।

पृथ्वीनारायणमा अनुग्रह शक्तिलाई धारण गर्ने शक्ति थियो । त्यसैले त उनले गुरु गोरखनाथबाट प्राप्त आशीर्वादलाई धारण गरेर राख्न सके । एकीकरण अभियानमा त्यसै धारण शक्तिले काम गरेको थियो– त्यो धारण शक्ति कहाँबाट आयो ? गुरु गोरखको आशीर्वादले । गुरु गोरखनाथको आशीर्वाद कहाँबाट प्राप्त भयो ? उहाँलाई खुशी र प्रसन्न पार्ने सत्कार्यले । यस्तो सत्कार्यको उदाहरण कस्तो हुन्छ ? गुरु गोरखनाथको श्रीचरणकमलमा अर्पण गर्ने रोटजस्तो ।

**नेपालको समुन्नतिको प्रार्थना, नेपालको उज्ज्वल भविष्यको कामना, यस सुन्दर देशको अस्तित्व रक्षाको सवालमा हामीभित्र छटपटी हुनुपर्‍यो, हामीभित्र आतुरता र व्याकुलता हुनुपर्‍यो । यही आकुलता अनि व्याकुलताले मात्र हामीलाई गुरू गोरखको अनुग्रहबाट युक्त गर्न सक्छ, निकाश दिन सक्छ । यही व्याकुलताको निशानी हो सवालाख रोट महोत्सव' ।**

वास्तवमा हामी अनुग्रह शक्तिलाई धारण गर्ने शक्ति संचय गर्दैछौं । हामी गुरु गोरखनाथको आशीर्वादका लागि आफूभित्र पात्रता निर्माण गर्दैछौं । पात्रताले गुरु गोरखको अनुग्रहको अधिकारी भइन्छ । अनुग्रह त्यो शक्ति हो जसले रूपान्तरण गर्छ, जसले आमूल परिवर्तन गर्छ पृथ्वीनारायणले गरेजस्तै ।

निश्चय नै प्रत्येक नेपालीलाई गुरु गोरखनाथको अनुग्रह शक्ति चाहिएको छ, उहाँको अनुकम्पा चाहिएको छ, उहाँको आशीर्वाद चाहिएको छ । पृथ्वीनारायणमा के यस्तो क्रन्दन र चित्कार थियो, उनले पाइहाले गुरु गोरखको अनुग्रह । हामीमा त्यही चित्कार आउन बाँकी छ, हामीमा त्यही क्रन्दन र छटपटी आउन बाँकी छ नेपालको उत्थानका लागि, नेपालको निर्माण र अस्तित्वका लागि ।

नेपालको समुन्नतिको प्रार्थना, नेपालको उज्ज्वल भविष्यको कामना, यस सुन्दर देशको अस्तित्व रक्षाको सवालमा हामीभित्र छटपटी हुनुपर्‍यो, हामीभित्र आतुरता र व्याकुलता हुनुपर्‍यो । यही आकुलता अनि व्याकुलताले मात्र हामीलाई गुरु गोरखको अनुग्रहबाट युक्त गर्न सक्छ, निकाश दिन सक्छ । यही व्याकुलताको निशानी हो 'सवालाख रोट महोत्सव' ।

रोट महोत्सव शान्तिको लागि हो, कल्याणको लागि हो, समुन्नतिको लागि हो, प्रगति र निकासको लागि हो । प्रत्येक वर्ष विराट् र विशाल दृष्टिले यस कार्यक्रमको आयोजना हुने गर्छ, किनकि यसको प्रेरक उनै राष्ट्रदेव गुरु गोरखनाथ हुनुहुन्छ । सिद्धाश्रम शक्तिले आयोजना गरेका सवालाख रोट महोत्सवलगायत अन्य सबै कार्यक्रमहरू, महोत्सवहरू, महाअनुष्ठानहरू त्यसैले त सफल भएका छन्, अद्वितीय भएका छन् । सर्वाधार गुरु गोरखनाथ यी सबैमा साथै हुनुभएकोले यो सम्भव भएको हो ।

जसको पछाडि उहाँकै साथ छ, जसको शिरमा उहाँकै अभयहस्त छ, जसको साथमा उहाँकै छत्रछायाँ छ र जसको मनले सदा नेपालको, नेपालीको अनि समस्त मानवको कल्याण खोजेको छ, सबैका लागि शान्तिको चाहना राखेको छ, सबैको विमुक्ति खोजेको छ, उनले रोडन र क्रन्दनको श्रृंखला कायम राख्न परेको छ, आतुरता र व्याकुलताको आँधीमा आफूलाई डोर्‍याउन परेको छ ।

....र, यी सबैका लागि आठौं सवालाख रोट महोत्सवले व्यग्र र व्याकुल भएर यहाँहरू सबैलाई स्वागत गरिरहेको छ ऐतिहासिक ठाम गोरखा आगमनका लागि ।

जय गुरुदेव !

**रोट महोत्सव शान्तिको लागि हो, कल्याणको लागि हो, समुन्नतिको लागि हो, प्रगति र निकासको लागि हो । प्रत्येक वर्ष विराट् र विशाल दृष्टिले यस कार्यक्रमको आयोजना हुने गर्छ, किनकि यसको प्रेरक उनै राष्ट्रदेव गुरू गोरखनाथ हुनुहुन्छ । सिद्धाश्रम शक्तिले आयोजना गरेका सवालाख रोट महोत्सवलगायत अन्य सबै कार्यक्रमहरू, महोत्सवहरू, महाअनुष्ठानहरू त्यसैले त सफल भएका छन्, अद्वितीय भएका छन् । सर्वाधार गुरू गोरखनाथ यी सबैमा साथै हुनुभएकोले यो सम्भव भएको हो ।**

## गुरु गोरखनाथको आशीर्वाद प्राप्त गर्ने अति प्रभावकारी माध्यम

# श्री शिवगोरक्ष हवन

'ॐ ह्रीं श्रयां क्षं गुरु गोरखनाथाय स्वाहा:'

यस मन्त्रको ध्वनि हिमवत्खण्ड पशुपति महाक्षेत्रमा गुञ्जेर त्यो क्षेत्रमात्रै होइन, समस्त हिमवत् क्षेत्रलाई नै चैतन्य र दिव्य बनाइरहेको पनि धेरै वर्ष भइसकेको छ । गुरु गोरखनाथको सिद्धपीठ, अवर्णनीय र अति दिव्य पीठको प्रांगणमा बसेर गोरक्ष मन्त्रजप गर्दै श्री शिवगोरक्ष हवन हुँदै आइरहेको छ । प्रत्येक महिनाको पहिलो सोमबार पशुपति मृगस्थलीको गोरक्षपीठमा सम्पन्न हुँदै आइरहेको यस हवनमा सहभागी हुने सौभाग्य धेरैले पाइरहेका छन् ।

चैतन्य गोरक्षपीठको चारैतिर बसेर गोरक्षमन्त्रसँगै 'स्वाहा, स्वाहा'को मधुरध्वनिका साथ चरु आहुति गर्नेहरूको समूहलाई देखेर पीठको बाटो हुँदै आवतजावत गर्ने भक्तहरू टक्क अडिएर हवन भइरहेको दृश्य हेर्छन् त कतिपय हवनमै सहभागी हुन पुग्छन् ।

हवनमा पहिलोपटक सहभागी एक साधकले भनेका थिए– मैले धेरै ठाउँमा हवन गर्ने सौभाग्य पाएँ तर यतिविघ्न सुन्दर, व्यवस्थित र दिव्य हवन गरेकै रहेनछु । उनका अनुसार यस हवनमा बस्दा उनले पाएको आनन्द शब्दले बताउन सकिन्न ।

अर्का एक भक्तले भनेका थिए– जीवनकै सर्वोत्तम हवनमा भाग लिने मौका पाएँ, भगवान् शिवको १०८ अवतारमध्ये सबैभन्दा महत्त्वपूर्ण अवतार श्रीशिव गोरक्षको हवनमा बस्दाखेरिको आनन्द र शान्तिको रसास्वादन अभूतपूर्व थियो ।

यसरी श्री शिवगोरक्ष हवनमा बस्दाखेरिको अनुभूतिलाई धेरैले धेरै रूपमा प्रस्तुत गर्दछन् । धेरैको अनुभव अलौकिक छ, धेरैको पारलौकिक छ र धेरैको दिव्य र आनन्दप्रद छ ।

म स्वर्गको देवराज इन्द्रको आसनमा बसेर हवन गर्दै थिएँ । त्यसबेलाको आनन्दलाई म शब्दमा कैद गर्न सक्दिन– तिलक लाउन लाममा बसेका एकजनाले आफ्नो अनुभव यसरी पोखेका थिए । हुन पनि उहाँको अनुभूति सबैका लागि एकसमान लागू हुन्छ । श्री शिवगोरक्षको हवन गर्न पाउनु, भक्ति गर्न पाउनु, उपासना गर्नु इन्द्र पद पाउनुभन्दा माथिको सौभाग्य हो, धेरैले यस्तै विचार राख्छन् ।

प्रत्येक महिनाको पहिलो सोमबार बिहान ८:०० बजे मृगस्थलीको गोरक्षपीठमा जम्मा भएका हवनका सहभागीहरूका विभिन्न अनुभव अनुभूतिहरूलाई सुन्दैमा पनि आनन्द आउने

## हवनको वैज्ञानिक पक्ष

यस सृष्टिका प्रथम मनुष्यले अपौरुषय वाणीको माध्यमबाट 'अग्नि मीडे पुरोहितं' भनेर ऋग्वेदको यसै वाक्यबाट अग्नि प्रज्ज्वलन सिकेका थिए । प्रकृतिका सबै शक्तिहरू यसपछि नै मानिसको वशमा आयो । वास्तवमा अग्निले नै भौतिक र वैज्ञानिक प्रगतिको मार्ग खोले । यसैले अग्निपूजा (Fire Worship) प्रकारान्तरले सबै धर्ममा समानरूपले सम्पन्न भइरहेको देखिन्छ ।

यज्ञ एउटा सम्पूर्ण उपचारपद्धति हो– पर्यावरण संशोधनका लागि, सूक्ष्मजगतमा संव्याप्त प्रदूषण हटाउनका लागि तथा मानवको स्थूल-सूक्ष्म कारण हरेक स्तरमा चिकित्सा गर्नका लागि । हामीले दिएका आहुतिले कसरी आफ्नो मन्त्रशक्ति एवं यज्ञ ऊर्जाको समन्वित स्वरूपको माध्यमबाट लाभ पुऱ्याउँछ, यही यज्ञोपचार प्रक्रिया हो । आत्मसत्तामाथि परेको कषायकल्मषहरूलाई सफा गरेर गुणसूत्र, क्रोमोजोम्स जीन्ससम्म यज्ञप्रक्रियाले प्रभाव पार्दछ ।

यज्ञाग्नि र सामान्य अग्निमा अन्तर छ । यज्ञमा रोग निवारणमा समीधा, शाकल्य तथा मन्त्रहरूको चयन कसरी गरिन्छ भन्ने प्रक्रिया सम्पूर्ण विज्ञान हो । पञ्चभूतबाट बनेको यस कायामा पृथ्वीतत्त्वको प्राधान्यता छ तथा पृथ्वीले सदा वायुबाट गन्धहरूको शोषण गर्दछ । यज्ञद्वारा यसै गन्धतत्त्वको प्रमुख क्षमताको उपयोग गरेर पृथ्वीमा उत्पन्न हुने वनौषधिहरूद्वारा शरीरका सम्भावित कमीलाई पूर्ति तथा विकारहरूको शमन गरिन्छ । ओजोन र ऋणात्मक आयन्सको मात्रा बढाएर यज्ञप्रक्रियाले साधक-याजकका चारैतिरको प्रभामण्डललाई बदल्छ र रक्तसंवहनद्वारा यी तत्त्वहरूलाई पूरै शरीरमा पुऱ्याएर प्रणाग्निलाई प्रज्ज्वलित बनाएर राख्दछ । प्राणाग्नि कुण्डलिनी नै हो जसले व्यक्तिको प्रतिरोधी सामर्थ्यलाई सतत बढाएर राख्दछ । यज्ञाग्नि र प्राणाग्नि कसरी परस्पर सम्बद्ध छ भन्ने बुझ्नु यज्ञोपचारको मूलमर्मलाई बुझ्नु हो । यज्ञोपचार वस्तुत: मानसोपचारको क्षेत्रमा सर्वश्रेष्ठ चिकित्सा प्रक्रिया हो । जहाँ कुनै पनि औषधिहरूको पहुँच छैन त्यहाँ यज्ञको वाष्पीभूत ऊर्जा पुगेर मनोरोग र मनोविकारहरूलाई शमन गर्दछ ।

मानवका लागि मात्र नभई समस्त इकोसिस्टमको उपचार पद्धति हो यज्ञ । यज्ञको लाभ देवदक्षिणाद्वारा व्यक्तित्वको परिष्कारको रूपमा देवत्वको संवर्द्धन र आसुरी तत्त्वको निवारणमा तथा प्राणपर्जन्यको वर्षाद्वारा अयनमण्डलको सुव्यवस्था बनाउने रूपमा मिल्दछ । गीताकारका अनुसार ***अन्नाद्भवन्ति भूतानि पर्जन्यादन्न संभवः । यज्ञाद्भवति पर्जन्यो यज्ञः कर्म समुद्भवः ।*** (३/१४) अर्थात् सम्पूर्ण प्राणी अन्नबाट उत्पन्न हुन्छन्, अन्नको उत्पत्ति वृष्टिबाट हुन्छ, वृष्टि यज्ञबाट हुन्छ र यज्ञ विहित कर्मबाट उत्पन्न हुन्छ । त्यसैले सर्वव्यापी परम अक्षर परमात्मा सदा नै यज्ञमा प्रतिष्ठित हुनुहुन्छ । यज्ञप्रक्रियाको यो पक्ष अति नै गूढ विवेचनाका साथ प्रस्तुत भएको पाइन्छ ।

गर्छ ।

निश्चय नै प्रत्येक हवन, आध्यात्मिक अनुष्ठान, महाअनुष्ठान, कार्यक्रम, महोत्सवहरूका विशिष्ठ उद्देश्य र लक्ष्य हुन्छन् । श्री शिवगोरक्ष हवनले पनि आफ्नो अभिष्ट लक्ष्य बोकेको छ । शान्ति, स्थिरता, सर्वजन हिताय सर्वजन सुखायको भावनाका साथ आयोजना भइरहेको यस हवनबाट भक्तजनले आ-आफ्ना भावनाअनुसार श्री श्री महायोगी गुरु गोरखनाथको आशीर्वाद, कृपा, अनुकम्पा पाइरहेका छन् । उहाँको कृपामात्रै सबै समस्याको निदान हो । उहाँको कृपा पाउनु भनेकै सबै समस्याबाट मुक्त हुनु हो । सबै समस्या, दु:ख, शोकबाट पार हुने उपाय भन्नु नै कैवल्य हो । कैवल्य भन्नु गुरु गोरखनाथ हुन् । त्यसैले हवनमा भाग लिनु गुरु गोरखनाथलाई पाउनु हो ।

# गोरक्षपीठ सिद्धाचल मृगस्थली

काठमाडौँबाट करिब ५ किमि पूर्वमा रहेको पशुपतिक्षेत्रमा रहेको श्लेषमान्तक वन आफ्नो गौरवलाई समेटेर रहेको छ। हिमवत्खण्ड पशुपति क्षेत्रलाई महाक्षेत्र, महापीठ, सिद्धक्षेत्र, पुण्य माहेश्वर एवं कामसिद्ध क्षेत्र अर्थात् इच्छा गरेको फल प्राप्त गर्ने ठाउँ भनी वर्णन गरिएको छ ।

यथार्थ विवरण नपाइए पनि मृगस्थलीमा शिवगोरक्षको शक्तिपीठको स्थापनासम्बन्धी सन्दर्भ राजा नरेन्द्रदेवको पालाको समयसित जोडिएको पाइन्छ । यस सन्दर्भअनुसार एकपटक श्री गुरु गोरखनाथ नेपालमा आउनुहुँदा उहाँको उचित कदर नभएकोले उहाँ खिन्न हुनुभयो । मानिसमा आएको मर्यादाहीन कुसंस्कारलाई देखेर उहाँ खिन्न हुनुभएको थियो । यस्ता कुसंस्कारीहरूलाई उचित पाठ सिकाउने उद्देश्यले उहाँ मृगस्थलीमा तपस्यामा लीन हुनुभयो । नागहरूको आसन बनाई उहाँले तपस्या गर्न थालेपछि नेपालमा पानी पर्न छोड्यो । पानी नपरेपछि अनिकाल पर्‍यो, हाहाकार शुरु भयो, सामाजिक जनजीवन अस्तव्यस्त भयो । राजा नरेन्द्रदेवले देशमा यस्तो स्थिति हुनाको कारण सोद्धा आचार्य बन्धुदत्तले नागहरूलाई आसनबाट मुक्त गरेमा पानी पर्ने बताए । तर नागहरूलाई मुक्त गर्न गुरु गोरखनाथलाई तपस्याबाट उठाउनु पर्ने हुन्छ । उहाँलाई आसनबाट उठाउने कसरी ? यसका लागि पनि उपाय निकालियो । कामरूप कामाख्याबाट गुरु गोरखनाथका गुरु मत्स्येन्द्रनाथलाई नेपाल ल्याउने योजनानुरूप कार्य भयो । आफ्ना गुरुको दर्शन पाउनासाथ गुरु गोरखनाथ आसनबाट उठ्नुभयो । नागहरू मुक्त भए । पानी पर्न थाल्यो । अनिकाल सिद्धिएर सहकाल आयो । गुरु गोरखनाथले तपस्या गर्नुभएको ठाउँ नै पछि सिद्ध गोरक्षपीठको रूपमा विख्यात भयो । पशुपतिपुराणमा मृगस्थलीको सिद्ध गोरक्षपीठको बारेमा यस्तो उल्लेख छ–

**अत्र गोरक्षकं नाम तीर्थं कामफलप्रदम् ।**
**तत्राभिषेक यः कुर्याद गोसहस्र फलंलभेत ॥**

अर्थात्, पशुपति क्षेत्रको मृगस्थलीमा गोरक्ष नामको तीर्थ छ । त्यहाँ गएर अभिषेक गर्नाले हजार गाई दान गरे बराबरको फल पाइन्छ । भगवान् महादेव पार्वतीलाई छल्न मृगको रूप धारण गरी यस क्षेत्रको किराँतेश्वर महादेवस्थित स्थानमा विचरण गर्नुभएकोले यस ठाउँको नाउँ मृगस्थली रहन गएको हो भन्ने स्वस्थानी महात्म्यमा वर्णन पाइन्छ ।

शिखरशैलीमा निर्मित अति नै आकर्षक गोरक्षपीठ १६४ वर्ष पुरानो मानिन्छ । यहाँ गुरु गोरक्षनाथको पादुका शोभायमान छ । चाँदीको पादुकालाई चाँदीकै शेषनागले छाताको रूप दिएर ओढाइएको छ । यस पीठको पछाडि गुरु मत्स्येन्द्रनाथको भनिने मूर्ति पनि रहेको छ । यहाँ कानफट्टा अर्थात् कानचिरुवा पूजारी मात्रै बस्ने व्यवस्था छ । कुण्डल धारक नाथपंथी पूजारीले नै यहाँ पूजाआजा गर्ने गर्दछन् । यहाँ मंगलबारका दिन गुरु गोरखनाथको चरणमा रोट चढाइन्छ ।

# श्री गोरक्ष आरती

तुम सतचित आनन्द सदाशिव आगम-निगम परे । योग-प्रचारण-कारण युग-युग गोरख रुप धरे ।१।
अकल-सकल कुल-अकुल परापर अलख निरंजन ए । भव-भव-विभव-पराभव-कारण योगी ध्यान धरे ।२।
अष्ट सिद्धि नव-निधि कर जोरे लोटत चरण तले । भुक्ति-मुक्ति सुख-सम्पत्ति यतिपति ! सब तव एव करे ।३।
शिव गोरक्ष हरे ! जय गोरक्ष हरे ! –४

कुण्डल मण्डित-गण्ड-स्थल छवि कुंचितकेश धरे । सदय नयन, स्मेरानन, युवतन, अँग-अँग ज्योति झरे ।४।
अमरकाय, अवधूत, अयोनिज, सुर-नर-नमन करे । तब कृपया परया परिवेष्टित, अधमहुँ पार तरे ।५।
कृष्णा-रुक्मिणी-परिणय-प्रकरणं, देवन विघ्न करे । सुनि ऋषि-मुनी विनती तुम प्रगटे, कंगन-बन्धन करे ।६।
शिव गोरक्ष हरे ! जय गोरक्ष हरे ! –४

सद्गुरु विषम-विषय-विष-मूर्छित, तिरीया जाल परे । जाग मछन्दर गोरख आया, गा उद्धार करे ।७।
प्रिया वियोग भरथरी विह्वल, विकल मसान फिरे । महामोहतम-मेटि दयानिधि ! सिद्धि-समृद्ध करे ।८।
कालभोज बाप्पा पर रीझे, खड्ग प्रदान करे । भये 'राजगुरु' चित्रकुट-पति, दिशि-दिशि विजय करे ।९।
शिव गोरक्ष हरे ! जय गोरक्ष हरे ! –४

पूरन भगत विमाता पीडित, बिनु अँग कूप परे । तब प्रसाद सर्वाङ्गपूर्ण है महासिद्ध निकरे ।१०।
अजपा, माणिक, रतन, चर्पटी, योगेश्वर सिगरे । गोगा, आल्हा, धरम, मल्लिका, तब गुणगान करे ।११।
कुपित जलन्धनाथ कानिपानाथहुँ रोष भरे । राजा गोपीचन्द मदनमति तब कृपया उबरे ।१२।
शिव गोरक्ष हरे ! जय गोरक्ष हरे ! –४

तब प्रसाद बल जीति छियालिस पृथिवी राज करे । नाम, पादुका वह कुल अवहूँ, मुद्रा मुकुट धरे ।१३।
सागरमसि लेखनी कल्पतरु, कागद भूमि करे । गणपति लिखई कल्पशत तबहुँ महिमा लेख परे ।१४।
जो आदित्यनाथ कृत यह स्तुति गाये श्रवण करे । नाथ कृपा तें सब सुख लहि भव-सागर पार करे ।१५।
शिव गोरक्ष हरे ! जय गोरक्ष हरे ! –६

# रुद्राक्ष

रुद्राक्षको रूख अम्बाको रूखजस्तै सानो हुन्छ । बयर अथवा अम्बाजस्तै यसको पातको डाँठमा रुद्राक्ष फल्दछ । यतिबेला यो निकै सानो हुन्छ । आठ-दस महिनामा सुकेर कठोर हुन्छ र झर्दछ । बेग्लाबेग्लै धारका रुद्राक्षहरू एउटै रूखमा फल्छन् । एकमुखीदेखि धेरै मुख भएका रुद्राक्ष एकै रूखमा फल्छ । रूखमुनिबाट रुद्राक्षलाई उठाइन्छ । रुद्राक्षको मुखअनुसार छाँटेर यसलाई अलग राखिन्छ । रुद्राक्षलाई रूखैबाट भने टिपिन्न ।

रुद्राक्षमा छिद्र भने हुँदैन । यसमा विशेषरूपले छिद्र बनाएर माला उनिन्छ । रुद्राक्षमा छिद्र बनाउनु पनि एउटा कला हो र सबैले यस कार्यलाई सम्पन्न गर्न सक्दैनन् । यो एउटा यस्तो कला हो जसलाई सिक्न सकिन्छ । रुद्राक्षको व्यापार व्यवसाय गर्नेहरूमध्ये धेरै यसमा पारंगत भएका पाइन्छन् ।

अन्य फलहरूजस्तै रुद्राक्षलाई पनि फलवर्गमा लिइन्छ । तर पनि यसलाई सेवन नगरी शरीरमा लगाउने गरिन्छ । यसलाई पूर्ण श्रद्धाका साथ शरीरमा धारण गरिन्छ । यसरी भन्नुपर्दा रुद्राक्ष फलको श्रेणीमा गणना हुँदैन भने पनि फरक पर्दैन, यसलाई देवीदेवतालाई पनि अर्पण गरिन्न ।

रुद्राक्षका जन्मदाता भगवान् शंकर हुनुहुन्छ । रुद्रको अर्थ भगवान् शिव र अक्षको अर्थ हो– आँशु । रुद्र र अक्ष मिलेर रुद्राक्ष बनेको छ । यो बयर अथवा केराउको दानाजत्रो हुन्छ । चार रङमा रुद्राक्ष पाइन्छन्– सेतो, रातो, मिश्रित र कालो । नेपाल र मलेशियामा मात्र रुद्राक्ष पाइन्छ । मलेशियाको रुद्राक्ष प्रायः ठूलो आकारको अर्थात् बयरजत्रा हुन्छन् । नेपालका रुद्राक्ष भने मटरको दानाजत्रा हुन्छन् । प्राचीनकालदेखि नै भारतका पौराणिक ग्रन्थमा रुद्राक्षको वर्णन र महात्म्य चल्दै आएको पाइन्छ । अनेकौं ग्रन्थहरूमा यसको वर्णन पाइन्छ । धेरै पहिलेदेखि साधुसंन्यासीहरूले यसलाई धारण गर्दै आइरहेका छन् । शिर, पाखुरा वा घाँटीमा रुद्राक्ष वा रुद्राक्षको माला धारण गर्ने विधान प्राचीनकालदेखि नै चलिआएको छ । धार्मिक समाजका लागि रुद्राक्ष नयाँ कुरा वा आश्चर्यजनक वस्तु होइन ।

रुद्राक्षमा धारहरू हुन्छन् । यी धारहरूलाई मुख भनिन्छ । रुद्राक्षमा यी धारहरू एकदेखि धेरै पनि हुन्छन् । सामान्यरूपमा पाँच धार भएको अर्थात् पञ्चमुखी रुद्राक्ष धेरै मात्रामा पाइन्छ । जब दुई रुद्राक्ष एकापसमा जोडिएको रूपमा हुन्छ भने यसलाई गौरीशंकर रुद्राक्ष भनिन्छ । तीनवटा रुद्राक्ष जोडिन्छन् भने 'पाट' भनिन्छ अर्थात् शिव, पार्वती र गणेश । यसप्रकारको रुद्राक्ष विरलै पाइन्छ ।

रुद्राक्षको वर्णन अनेकौं धार्मिक-पौराणिक ग्रन्थहरूमा आउँछन् । रुद्रजाबालोपनिषद्, शिवपुराण, उड्डीशतन्त्र, पद्मपुराण यिनमा प्रमुख छन् । तन्त्रमन्त्रमा पनि रुद्राक्षको ठूलो महत्त्व हुन्छ । रुद्राक्षको मालाको आफ्नै विशेष महत्त्व हुन्छ । पूजापाठ वा देवीदेवताहरूको उपासनामा यस मालाको आफ्नै महत्त्व छ । यो माला अति नै पवित्र र फलदायी मानिन्छ ।

**रुद्राक्ष च शिवाक्षं च सर्वाक्ष भूत नाशनम् ।**
**पावन नील कण्ठाक्ष राक्षंच शिवप्रियम ॥**

रुद्राक्ष त्यो दिव्य अस्त्र हो जसलाई धारण गर्नाले चारै सिद्धिहरू ज्ञानसिद्धि, कार्यसिद्धि, धनसिद्धि तथा अन्नपूर्णा सिद्धि स्वतः नै प्राप्त हुन जान्छ । अति नै दुर्लभ दैवीय शक्तिहरू कल्पवृक्ष, कामधेनु एवं चिन्तामणिरत्न रुद्राक्षमा निहित छन् ।

रुदाक्षको उपयोग ज्योतिषशास्त्रमा ग्रहहरूको कुप्रभावलाई निवारण गर्न गरिन्छ । जसरी रत्न एवं उपरत्नले ग्रहहरूका दोष दूर हुन्छन्, त्यसरी नै रुद्राक्षबाट पनि ग्रहदोषको निवारण हुन सक्छ । रत्न एवं उपरत्न हानिकारक पनि हुन सक्छ । तर रुद्राक्ष कहिल्यै पनि हानिकारक हुँदैन ।

जसरी सबै राक्षस एवं देवताहरूलाई भगवान् शिवगोरक्ष प्रिय लाग्ने हुन्छ, त्यसरी नै रुद्राक्ष धारकलाई पनि सबैले मन पराउँछन् । जो अपवित्र छ, नराम्रा कार्यहरू गर्छ, अनेक पापहरूले जसको जीवन भरिएको छ, उसले पनि यदि रुद्राक्ष धारण गर्छ भने ऊ सबै पापहरूबाट मुक्त हुन्छ ।

रुद्राक्ष अभिलषित पदार्थहरूका दाता, सदैव भोग-मोक्ष दिने हुन्छ । शिवपार्वतीको प्रसन्नताका लागि रुद्राक्ष धारण आवश्यक छ । स्त्रीहरूले पनि रुद्राक्ष धारण गरेको प्रमाण पाइन्छन् । यसले उनीहरूको सौभाग्य वृद्धि र रोगको निवृत्ति गर्दछ । रजस्रावको चारदिन यसलाई धारण गर्नुहुन्न । पाचौँ दिनमा स्नान गरेर धारण गर्न सकिन्छ । जहाँ रुद्राक्षको पूजा हुन्छ त्यहाँ लक्ष्मी विराजमान् हुन्छिन्, उपद्रव नष्ट हुन्छ तथा मनोकामनाहरू पूर्ण हुन्छन् ।

रुद्राक्षको मुख ब्रह्मा हुन्, विन्दु शिव हुन्, तलको भाग विष्णु हुन् । त्रिदेवविशिष्ट रुद्राक्ष भुक्तिमुक्तिलाई दिनेवाला हो ।

**रुद्राक्षमालिनं दृष्टवा शिवो विष्णुः प्रसीदति ।**
**देवी गणपतिः सूर्यः सुराश्चान्येऽपि पार्वती ॥**

(शिवपुराण)

अर्थात्, रुद्राक्षको माला धारण गरेका व्यक्तिलाई देखेर शिव, विष्णु, देवी, गणेश, सूर्य, पार्वती सबै देवगण प्रसन्न हुन्छन् ।

मन्त्रतन्त्रका प्राचीन साहित्य रुद्राक्षको महत्ताबाट भरिएका पाइन्छन्–

**रुद्राक्षमाल्या जप्तो मंत्रः सर्वफलप्रदः ।**

अर्थात्, रुद्राक्षको मालाद्वांरा जप्नाले मन्त्रले समस्त फललाई प्रदान गर्दछ ।

**तेनाश्रुविन्दुभिर्जाता मर्त्ये रुद्राक्षभूरुहाः ।**
**स्थावरत्वमनुप्राप्ता लोकानुग्रहकारकाः ॥**

रुद्रदेवको अक्षबाट मनुष्यलोक (भूलोक) मा रुद्राक्षको रूख उत्पन्न भई स्थावरत्वलाई प्राप्त भएर संसारको हितमा शुभ फल प्रदान गर्दछ ।

**रुद्राक्षाणां फलं तस्य त्रिषु लोकेषु विश्रुतम् ।**
**लक्षं तत्स्पर्शने पुण्यं कोटिर्भवति मालनात् ॥**

तीनै लोकमा रुद्राक्षरूपी फलको स्पर्शमात्रले पनि लाखगुणा फल प्राप्त हुन्छ । माला धारण गर्नाले त्यसभन्दा पनि अधिक फल प्राप्त हुन्छ ।

स्वयं शिवगोरक्षले रुद्राक्षको भेद यस्तो बताउनुभएको छ–

**बभूवुस्ते रुद्राक्षा अष्टत्रिंशत्प्रभेदतः ।**
**सूर्यनेत्रसमुद्भूताः ता कपिला द्वादश स्मृताः ॥**

रुद्राक्ष ३८ प्रकारका पाइन्छन् । तीमध्ये मेरो सूर्य नेत्र (दायाँ आँखा) बाट कपिल वर्णको १२ प्रकारका रुद्राक्ष उत्पन्न भए ।

**सोमनेत्रोत्थिताः श्वेतास्ते, षोडशविषाः क्रमात् ।**
**वह्निनेत्रोद्भवाः कृष्णा दश, भेदा भवन्ति हि ॥**

मेरो सोमनेत्र (बायाँ आँखा) बाट श्वेतकर्णका १६ प्रकारका र अग्निनेत्र (तेस्रो आँखा) बाट १० प्रकारका रुद्राक्ष उत्पन्न भए ।

**श्वेतवर्णश्च रुद्राक्षो जातितो ब्राह्म उच्यते ।**
**क्षात्रो रक्तस्तथा मिश्रो वैश्यः कृष्णास्तु शूद्रकः ॥**

सेतो वर्णको रुद्राक्ष ब्राह्मण, रातो क्षत्रिय, मिश्रित वैश्य र कालो रङको रुद्राक्ष शूद्रले धारण गर्नुपर्दछ ।

रुद्राक्षको उत्पत्ति र महिमाको यो वर्णनले आदिकालदेखि सनातनधर्मीहरूलाई प्रेरित गर्दै आइरहेको छ र रुद्राक्षले सनातनीहरूलाई कल्याण गर्दै आइरहेको छ । रुद्राक्षको व्यापक महत्त्व र उपयोग छ । अमलाजत्रो रुद्राक्ष सर्वोत्तम मानिएको छ । यस आकारको रुद्राक्ष धेरै कम मात्रामा पाइन्छन् ।

रुद्राक्षलाई चिन्न सक्ने आधारहरू केही छन् । यो पानीमा तैरिन्न । अर्थात् पानीमा राख्दा यो डुब्दछ । घुन लागेको, कीराले खाएको, टुटेफुटेका र छिलेर बनाइएका रुद्राक्ष धारण गर्नुहुँदैन, न त यसलाई रंगाउनु नै हुन्छ ।

रुद्राक्षजस्तै देखिने फल पनि पाइन्छ । यसलाई भद्राक्ष भनिन्छ । भद्राक्ष पानीमा डुब्दैन र यो टेढोमेढो हुन्छ । यसलाई सजिलै चिन्न सकिन्छ । रुद्राक्ष भगवान् शंकरको प्रिय आभूषण हो । रुद्राक्षको माला जपतप र अनेकथरिका तन्त्रमन्त्रको कार्यमा आउँछ । रुद्राक्ष वैज्ञानिक दृष्टिले महत्त्वपूर्ण र अनेकथरिका फल प्रदान गर्ने अद्भूत फल हो । जीवनका अनेकौं महत्त्वपूर्ण कार्यहरूमा यो उपयोगमा आउँछ ।

# घर घरबाट रोट अर्पण हुन सक्यो भने....

विगत सात वर्षदेखि सिद्धाश्रम शक्ति केन्द्रले रोटको महिमा गाउँदै आइरहेको छ। रोटको महिमा, गरिमा, विशेषतालाई दृष्टिगत गरेर नै यस संस्थाले विगत सात वर्षदेखि सबैका अतिप्रिय महायोगी राष्ट्रगुरु गोरखनाथको चरणकमलमा सवालाख रोट अर्पण गर्दै आइरहेको छ ।

विगतका दिनहरू निश्चय नै अति नै भयावह थिए। विगत केही वर्ष अघिका दिनहरू निश्चय नै अशान्त, विद्रोह, आक्रमणका थिए र विगतको उकुसमुकुसलाई पन्छाउने जमर्को धेरैले धेरै किसिमबाट गरेका थिए । त्यही जमर्कोभित्र सिद्धाश्रम शक्ति केन्द्रको सवालाख रोट महोत्सव पनि एक थियो ।

विभिन्न क्षेत्रबाट भएका विभिन्न प्रयास प्रयत्नले विगतको कोलाहल शान्त हुन गयो, विगतको अन्धकार हट्यो । तर यस अन्धकारले बेलाबेला शिर उठाइरहेको अनुभूति गर्न पर्दा सबैलाई बेमज्जा भइरहेको छ । कोलाहल पुन: बिउँतिने डर एकातिर छ भने विखंडनको, विद्रोहको, बेमेलको स्थितिले पनि सातो लेला भन्ने डर छ। कुनचाहिँको कुनबेला कन्सिरी तातेर अशान्ति हुने हो भन्ने डर छ । अर्कोतिर आन्तरिक खिचातानीबाट कमजोर राष्ट्रलाई मुढेबल लगाएरै भए पनि, चर्को आवाजले थर्काएरै भए पनि दबाउनेहरूको बिगबिगी बढ्ला भन्ने डर छ । डरैडरको साम्राज्य एकातिर छ, अर्कोतिर चरम अव्यवस्थाको मारमा जनता दिनदिनै निस्सारिरहेका छन् । यस्तो विकराल स्थितिका बीच, यस्तो कोलाहल स्थितिका बीच सिद्धाश्रम शक्ति केन्द्रले गुरु गोरखनाथको चरणकमलमा सवालाख रोट चढाउने संकल्प गरेको आजभन्दा सातवर्ष अघिदेखि हो ।

देशको विकराल स्थिति र रोट अर्पणको के सम्बन्ध छ भन्ने लाग्न सक्छ। वास्तविकतालाई उजागर नगरी कुनै पनि कार्यक्रमको बखान मात्रै गर्नाले मानिसहरू अलमलिन सक्छन् । उद्देश्य के हो त रोट अर्पणको ? मुखै खोलेर जवाफ देओस् भन्न चाहनुहुन्छ ? त्यसो भए सुन्नुस्– गुरु गोरखनाथलाई खुशी पार्ने ।

हुन त गुरु गोरखनाथलाई सबैले सधैं मनाउने, खुशी तुल्याउने प्रयास प्रयत्न भने नगरेका होइनन् । कुन्नि कसले केके गरे रे, तर गुरु गोरखनाथ खुशी हुनु भएनछ । जब उहाँलाई रोट अर्पण

गरियो तब अति नै खुशी हुनुभएर आशीर्वाद दिनुभएको थियो भन्ने बूढापाकाका कुरा सुन्न अभ्यस्त यी कानहरूमा सधैँ 'रोट कस्तो हुन्छ हाँ ?' भन्ने सवाल पनि परिरहने गरेकाले यसको बारेमा पनि दुइचार पङ्क्ति लेख्न मनलाग्यो–

चामल, गहुँ अथवा जौको पिठोमा विभिन्न खालका मसलाहरू र अति नै पौष्टिक काजु, किसमिस, छोहरा, नरिवल, पेष्टा, चिनी इत्यादि मिलाएर घिउमा तारेर बनाएको खाद्यवस्तु नै रोट हो । माथिका सबै सामग्री मिलाएर भुङ्ग्रोमा सेकाएर पकाएको रोट पनि गुरु गोरखनाथलाई चढाउने गरिन्छ। रोटका यी माथिका दुई प्रकार थाहा भएपछि तारेको रोटलाई ताई रोट र सेकाएकोलाई भुङ्ग्रे रोट भनिन्छ भन्ने ज्ञात भए अझ वेश हो । अर्को चाखलाग्दो कुरा हो– रोटका लागि तयार भएको पिठोमा विशेष आकृति (पृथ्वीको आकार) पनि बनाइन्छ, यसमा बीचमा नाभि (ॐ कार) बनाइन्छ। यसलाई शिवलिङ्ग पनि भनिन्छ ।

रोट बनाउँदा नाथयोगीहरूले विशेष मन्त्रसहित बनाउँछन् । यो सदियौँ पुरानो परम्परा हो । अर्को परम्परा पनि छ– गुरु गोरखनाथलाई रोट चढाउँदा विशेष मन्त्रसहित चक्कुले रोटको बीचको भाग काटी चढाउने गरिन्छ ।

रोट बनाउँदा अपनाउने शुद्धाशुद्धिको कुरा त भनिसाध्य छैन। सुन्दा नै पवित्र भइहाल्छौँजस्तो । नुहाइधोइ, पवित्र र चोखो वस्त्र लगाई मुखमा मास्क लगाई बस्नुपर्छ रोटको पिठो मुछ्न अनि रोटको आकार दिन । तरल मात्र पिएर बस्नुपर्छ रोट तयार नभएसम्म । यति मात्रै हो र ? यस अवधिमा आफूलाई आत्ममुखी बनाउनुपर्छ, विचार शुद्ध राख्नुपर्छ, इन्द्रियादिलाई नियन्त्रणमा राखेर उनै परमाराध्य गुरु गोरखनाथको चिन्तन, ईश्वरचिन्तन, आत्मचिन्तन, परमात्माचिन्तनमा मन लगाइराखेर रोटका यावत् कामकुरा गर्नुपर्ने

हुन्छ । यसरी बनेको रोटलाई गुरु गोरखनाथलाई निमित्तभावले भक्तिभावपूर्वक उहाँको सुखका लागि, उहाँको सन्तुष्टिका लागि, उहाँको आशीर्वादका लागि अर्पण गरेपछि गुरु गोरखनाथ खुशी हुनुहुने हो । उहाँ खुशी हुनु भएपछि जुन कामनाले रोट अर्पण गरिएको हो, त्यसको पूर्ति हुन्छ ।

र, सिद्धाश्रम शक्ति केन्द्रले मानवकल्याण र शान्तिको कामनाले विगत सात वर्षदेखि गुरु गोरखनाथको चरणकमलमा सवालाख रोट अर्पण गर्दै आइरहेको छ। विगतका समयमा सवालाख रोट कार्यक्रम समाप्तिपछि देशमा आएको सकारात्मक परिवर्तनलाई नियाल्दा रोट अर्पण देशको शान्ति, अमनचयन र देशवासीको कल्याणका लागि एउटा ठूलो माध्यम, रामवाण साधन, अचुक उपाय भएको सबैले महसुस गरेका छन्। प्रत्येक वर्षको सवालाख रोट अर्पण कार्यक्रमबाट आएको परिवर्तन, छाएको शान्ति, भएको कल्याणलाई सबैले महसुस गरेकै छन् । त्यसैले सिद्धाश्रम शक्ति केन्द्र गौरवका साथ भन्ने गर्दछ कि गुरु गोरखनाथलाई रोट अर्पण गरेपछि मात्रै नेपालमा स्थिरता आउँछ, देशमा शान्ति छाउँछ र सबैको कल्याण सम्भव छ। स्थिरता, अमनचयन र प्रगतिको बलियो आधार भनेको गुरु गोरखनाथको चरणकमलमा रोट अर्पण गर्नु हो भन्ने नारालाई सिद्धाश्रम शक्ति केन्द्रले विगत सात वर्षदेखि कार्यान्वयन गर्दै आइरहेको छ ।

यसपटक आठौँ सवालाख रोट महोत्सव सम्पन्न हुँदैछ । सिद्धाश्रम शक्ति केन्द्रले मानवकल्याण र शान्तिको विगुललाई यसपटक पनि फुक्दैछ । निश्चय नै गुरु गोरखनाथको कृपा, अनुकम्पा सबैले पाउनेछन्। सबैले फेरि एकपटक गुरु गोरखनाथको जयघोषबाट देशकै जय भएको हेर्न पाउनेछन् ।

तर सबैले एउटा कुराको भने मनन गर्नैपर्ने भएको छ, सबैले एउटा निर्णय भने गर्नैपर्ने भएको छ । त्यो के हो भने प्रत्येकले दिनदिनै हुन्छ वा हप्तामा, महिना-महिनामा हुन्छ वा पन्ध्र दिनमा, मंगलबार हुन्छ वा सोमबार, बिहीबार हुन्छ वा अन्य कुनै बारमा आफ्नो घरबाट, आफ्नो ठाउँबाट गुरु गोरखनाथलाई रोट चढाउने। जति सकिन्छ त्यति चढाउने, जति हुन्छ त्यति गर्ने । यसबाट गुरु गोरखनाथको कृपा, अनुकम्पा चाँडै प्राप्त हुने कुरामा कुनै शंका रहन्न । गुरु गोरखनाथ राष्ट्रगुरु हुनुहुन्छ। उहाँ कुनै धर्मको, कुनै सम्प्रदायको, कुनै संस्थाको मात्र हुनै सक्नुहुन्न । उहाँ त सबैका हुनुहुन्छ किनकि उहाँ नै आत्मरूपमा सबैको हृदयमा विराजमान हुनुहुन्छ । उहाँ सबै धर्मसम्प्रदायका मूलकेन्द्र हुनुहुन्छ । त्यसैले सबैका आराध्य हुनुहुन्छ, सबैका उपास्य हुनुहुन्छ ।

मानवकल्याण र शान्ति सबैको ध्येय हो र हुने गर्दछ । यस ध्येयको पूर्तिका लागि गुरु गोरखनाथलाई खुशी तुल्याउनु अत्यावश्यक हुन्छ । उहाँलाई खुशी तुल्याउने एउटै उपाय छ, अचुक उपाय छ– सबैले घर घरबाट रोट चढाउने ।

जय गुरुदेव !

# भाका ह्याप्पी बर्थ डे टु यू को

'ह्याप्पी बर्थ डे माता, ह्याप्पी बर्थ डे' भनेर माताजीलाई Wish गरेको धेरै दिन बित्न नपाउँदै उस्तै भाका हालेर परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमाली (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज) को ७६ औं अवतरण दिवसलाई धुमधामका साथ मनाइएको छ ।

अप्रिल २१ तारीखलाई अवतरण दिवसको रूपमा मनाउने क्रममा सिद्धाश्रम शक्ति केन्द्रले गत वैशाख ८ गते काठमाडौँको कमलपोखरीस्थित अग्रवाल भवनमा भव्य एवं दिव्य कार्यक्रमको आयोजना गरी यसलाई मनाएको हो । सुसज्जित अग्रवाल भवनको कार्यक्रम हलमा बिहान ९:०० बजे स्तुतिवन्दना र प्रार्थनाबाट शुभारम्भ भएको उक्त कार्यक्रम गोरक्ष स्तवन र निखिल स्तवनको सस्वर पाठसँगै अघि बढेको थियो । त्यसपछि गुरु पूजनको क्रम चलेको थियो । उक्त दिनको पूजनमा अगाडि बसेर सद्गुरुदेवहरूको पादुका पूजन गर्ने सौभाग्य शकुन्तला तिमिल्सिना, जयन्ती पुडासैनी, मधुमति रंजित, भाष्कर रायमाझी, विजया रायमाझी, मीरा आचार्य, रामचरी बलामी, नानीमैँयाँ महर्जन, रियाना प्रधान, आशा थापा, रूपक अर्याल, रक्षा अर्याल, अम्बिका थापा, मञ्जु सिलवाल, उल्झना तण्डुकार र विष्णुदेवी तण्डुकारले पाउनुभएको थियो । पूजनपछि गुरुमन्त्र जपको क्रम रहेको थियो । त्यसपछि हलबाहिर हवनको क्रम चलेको थियो । त्यसबेला हलभित्रकाहरू भजन र संगीतमा रम्नुभएको थियो । हवनपछि लक्षदीप अर्पणको क्रम रहेको थियो । धेरै साधकसाधिकाहरूले गुरुचरणमा लाखबत्ती समर्पित गर्नुभएको थियो । कार्यक्रमभरि नै भजनकीर्तन, नृत्य प्रस्तुत भएका थिए । विभिन्न सम्पर्क कार्यालयहरूको तयारीमा विविध मनमोहक नृत्यहरू प्रस्तुत भएका थिए, कर्णप्रिय भजनहरू प्रस्तुत भएका थिए ।

कार्यक्रममा संस्थागत वार्षिक प्रतिवेदन सावरमातृका साधिका विन्देश्वरी बरालले पढेर सुनाउनुभएको थियो । कार्यक्रममा सावरपन्थी साधक रामजी अर्यालले लोप भएका धरोहरहरूको संरक्षण र पुनरुद्धार गर्न र गुरुको अभाव परिपूर्ति गर्न परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज गुरु रूपमा आउनुभएको बताउनुभयो । उहाँले गुरुऋण तिर्न गुरुको योजनामा भाग लिनुपर्ने आवश्यकतामाथि प्रकाश पार्नुभयो । गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको बारेमा बताउनुहुँदै उहाँले भन्नुभयो, 'भारतीयहरू पनि आफ्ना बालबच्चालाई यहाँ पढाउन इच्छुक छन् ।'

कार्यक्रममा गुरुधाम जोधपुरबाट पूज्य गुरुदेव अरविन्दज्यूको आशीर्वादको श्रव्यलाई प्रत्यक्ष प्रशारण गरिएको थियो । उक्त अवसरमा वन्दनीय गुरुमाताले पनि आशीर्वाद दिनुभएको थियो । कार्यक्रममा पशुपतिस्थित श्री अन्नपूर्ण भण्डारका संरक्षक पशुपतिबाबाका अतिरिक्त अन्य नाथयोगी र साधुसन्तहरूको पनि उपस्थिति थियो । कार्यक्रममा सावरपन्थी साधक रामजी अर्याल र पशुपतिबाबाले संयुक्तरूपमा बर्थ डे केक काट्नुभएको थियो । केकलाई उपस्थित सबैलाई वितरण गरिएको थियो ।

कार्यक्रममा भक्तपुरको हनुमन्तेपुलमा हालै निर्माणाधीन आश्रम भवनका लागि दाताहरूबाट सहयोगस्वरूप रकम प्राप्त भएको थियो ।

उपत्यका बाहिरका सबै सम्पर्क कार्यालयहरूमा पनि उक्त दिन विशेष कार्यक्रमहरू संचालन गरी अवतरण दिवस मनाइएको थियो । आश्रमका प्रत्येक इकाईहरूमा साँझ दीपावलीको साथमा भजनकीर्तन गरिएको भएको थियो ।

# २०६८ जेठ महिनाको

# राशिफल

– ज्यो. हरिओम अधिकारी
*'ज्योतिष भाष्कर'*

*(प्रस्तुत राशिफल सूर्य सिद्धान्तमा आधारित छ । राशिफल लेखक अधिकारीज्यूको सगरमाथा टेलिभिजनमा हरेक दिन बिहान ९:१५ देखि १०:०० बजेसम्म कार्यक्रम 'ग्रहफल' प्रत्यक्ष प्रशारण हुन्छ ।)*

**मेष** (चू, चे, चो, ली, लु, लो, आ):
मान, सम्मान प्राप्ति हुनुका साथै सरकारी जागिरमा प्रगति हुने योग छ । विद्यामा प्रगति तथा सन्तानबाट लाभ मिल्नेछ । खर्चमा वृद्धि होला । घाँटीको समस्या हुनसक्छ । यात्राको योग छ । व्यापार व्यवसायबाट लाभ मिल्नेछ तर वातावरण अस्थिरतायुक्त देखिन्छ । तपाईंका लागि ८ अंक शुभ रहेको छ । रातो, कलेजी र निलो रङ शुभ छ ।

**वृष** (ई, उ, ए, ओ, वा, वी, वू, वे, वो):
सामाजिक तथा राजनीति कार्यमा प्रगति हुनेछ । नोकरीमा पदोन्नति हुने योग छ । विद्या तथा बुद्धिमा प्रगति हुनेछ । खर्चमा बृद्धि हुनेछ । स्वास्थ्यमा बाधा आउनुका साथै मनस्थिति अस्थिर रहनेछ । विदेश यात्राको समेत योग छ । तपाईंका लागि ६ अंक शुभ रहेको छ । खरानी, पहेँलो र सेतो रङ शुभ छ ।

**मिथुन** (का, की, कु, घ, छ, को, हा):
प्रशस्त धनसम्पत्ति प्राप्त हुने योग छ । मन मस्तिष्कमा विभिन्न विचारले डर चिन्ता उत्पन्न गराउला । जोर्नीको समस्या हुन सक्नेछ । पतिपत्नीमा विवाद रहने तथा साथीभाइसँग मनमुटाव हुन सक्नेछ । तपाईंका लागि ५ अंक शुभ रहेको छ । हरियो, निलो र कालो रङ शुभ छ ।

**कर्कट** (ही, हु, हो, डा, डी, डे, डा):
पराक्रम वृद्धि हुनेछ । देशविदेशको यात्रा समेत होला । नयाँ मानिसहरूसँग सम्पर्क हुनेछ । खर्चमा वृद्धि हुनुका साथै रोगव्याधिले सताउनेछ योग छ । तपाईंका लागि २ र ४ अंक शुभ रहेको छ । सेतो, पहँलो र खरानी रङ शुभ छ ।

**सिंह** (मा, मी, मु, मे, मो, टा, टी, टू, टा):
बुद्धि भ्रमित हुने तथा नकारात्मक विचारहरू जन्मने सम्भावना छ । चलाखीपूर्ण व्यवहारले कार्य प्रगति उन्मुख रहनेछ । धन प्राप्तिको बाटो खुल्नेछ । राजनीति, नोकरी, व्यापारबाट लाभ प्राप्त हुनेछ । तपाईंका लागि १ र ५ अंक शुभ रहेको छ । रातो, निलो र कलेजी रङ शुभ छ ।

**कन्या** (टो, पा, पी, पू, ष, ण, ठ, पे, पो):
घरबाहिरका कार्यहरू पूर्ण हुनेछन् । घरमा भने झैझमेला हुने सम्भावना छ । विदेश जाने अवसर पनि प्राप्त हुन सक्छ । धेरै संघर्ष गर्नुपर्ला । तपाईंका लागि ५ अंक शुभ रहेको छ । हरियो, निलो र कालो रङ शुभ छ ।

**तुला** (रा, री, रु, ता, ती, तु, ते):
यात्रा तथा व्यापारबाट लाभ प्राप्त हुनेछ । आयात निर्यातको कार्यबाट लाभ होला । नोकरीमा स्थानान्तरण हुने तथा राज्यबाट हानि हुने सम्भावना छ । जिद्दीपन बढ्नुका साथै दाजुभाइसँग झगडा हुने सम्भावना छ । विद्यामा खासै प्रगति नहुने देखिन्छ । तपाईंका लागि ६ अंक शुभ रहेको छ । सेतो, पहँलो र खरानी रङ शुभ छ ।

**वृश्चिक** (तो, ना, नी, नू, ने, नो, या, यी, यु):
विद्यामा प्रगति हुनेछ । सन्तानबाट सुख प्राप्ति हुनेछ । परीक्षा तथा प्रतियोगितामा प्रगति हुने योग छ । वैदेशिक कार्यबाट लाभ प्राप्त हुनेछ । विवाह, भोज तथा समारोहहरूमा सहभागिता हुनेछ । नराम्रो बोलीबचन हुनसक्ला । धनका स्रोतहरूमा बाधा हुनुका साथै शत्रुहरूले बाधा दिनेछन् । तपाईंका लागि ८ अंक शुभ रहेको छ । निलो, कलेजी र रातो रङ शुभ छ ।

**धनु** (ये, यो, भा, भी, धा, फा, दा, भे):
विद्या बुद्धिमा प्रगति होला । परीक्षा तथा प्रतियोगिताहरूमा सफलता प्राप्ति हुने योग छ । सन्तानबाट लाभ हुनेछ । व्यवसायमा प्रगति हुनुका साथै मान, सम्मान, प्रतिष्ठा प्राप्त होला । साथीसंगीसँग विवाद हुने तथा चिन्ता बढ्ने सम्भावना छ । आफ्नो स्वास्थ्यप्रति सजग रहनुहोला । तपाईंका लागि ३ र ४ अंक शुभ रहेको छ । पहँलो, गुलाबी र खैरो रङ शुभ छ ।

**मकर** (भो, जा, जी, खू, खे, खो, गा, गी):
सुख सुविधा थपिने छ । शिक्षामा प्रगति होला । भाग्य वृद्धि हुने योग छ । खर्च बढ्नेछ । व्यापारबाट लाभ प्राप्त हुनेछ । नोकरीमा विवाद हुने सम्भावना छ । तपाईंका लागि ३ र ८ अंक शुभ रहेको छ । निलो, कालो र हरियो रङ शुभ छ ।

**कुम्भ** (गू, गे, गो, सा, सी, सू, से, सो, दा):
पराक्रम बढ्नेछ । घुमफिर र यात्रा हुने योग छ । ढाड, कम्मरको समस्या पनि हुनसक्ला । सुख सुविधामा वृद्धि होला । विद्याबाट लाभ प्राप्त होला । जागिरमा पदोन्नति हुन सक्ने योग छ । मन चंचल रहनुका साथै खर्चमा वृद्धि होला । संयमलाई आत्मसात गर्नुहोला । तपाईंका लागि ३, ८ र १२ अंक शुभ रहेको छ । निलो, गुलाबी र सेतो रङ शुभ छ ।

**मीन** (दी, दु, थ, झ, दे, दो, चा, ची):
धन सम्पत्तिमा वृद्धि होला । विद्या बुद्धिमा प्रगति हुनेछ । पराक्रम बढ्नेछ । यात्राको योग छ । नोकरी तथा व्यापार व्यवसायबाट लाभ मिल्नेछ । अस्थिर वातावरणमा अल्झिने सम्भावना पनि देखिन्छ । तपाईंका लागि ३ अंक शुभ रहेको छ । गुलाबी, पहँलो र धुम्रो रङ शुभ छ ।

परमपूज्य सद्गुरुदेव भन्नुहुन्छ– संसारमा मात्र दुई यस्ता शब्दहरू छन् जो चिन्तन गर्न योग्य छन् बाँकी सबै शब्दहरू व्यर्थ छन्, ती शब्द हुन्– 'गुरु' र 'शिष्य' । तपाईं जहाँ हुनुहुन्छ आफ्नो वरिपरि हेर्नुहोस् विविध सामग्रीहरू छन्– किताब, पलङ, कपडा, बोटविरुवा, मनमोहक फूलबारी, खोला, झरना, मानिसहरू, कीरा फट्याङ्ग्रा, पशुपंछी, माटो, बालुवा, ढुङ्गा आदि । तपाईंले आँखाले हेरुन्जेल, कानले सुनुन्जेल, शरीरले भोग गरुन्जेल यस पृथ्वीलोकमा वा यसभन्दा अलग्गै अन्य कुनै लोक लोकान्तरमा जे जति हेर्न, सुन्न, भोग्न, देख्न पाउनुहुन्छ ती सबै एउटा दिव्यतम् शब्दले मात्रै सम्भव भएको छ र त्यो शब्द हो– 'गुरु' । बिना गुरु व्यक्तिको त कुरै छोडौं, सारा जगतको अस्तित्व नै व्यर्थ छ । सम्पूर्ण ग्रह, नक्षत्र, सूर्यमण्डल जसको शक्तिले गर्दा देदीप्यमान छन्, तेत्तीसकोटि देवीदेवताहरू जसको एक एक आदेश पालन गर्नको लागि व्यग्रताका साथ प्रतीक्षारत रहन्छन्, उच्चकोटिका योगी, ऋषिमुनि, तपस्वीहरू जसको इशारामात्रले पनि आफ्नो नामोनिसान मेटाउन सधैं तत्पर रहन्छन्, त्यस्ता 'सद्गुरु'को मार्गनिर्देशन प्राप्त गरी अगाडि बढ्दै जान पाउने एउटा साधारण पशुसरहको मानव पनि उच्चतम शिष्यमा परिणत हुन सक्दछ । संसारीक रागरङमा डुब्नु, मीठो खानु, राम्रो लाउनु, भ्रमण गर्नु, आफूलाई सिङ्गार्नु, बल, यौवन प्राप्त गर्नु, विवाह गर्नु, परिवारको माग र समस्या पूरा गर्दागर्दै रोगी, जीर्ण शरीर र अनगिन्ती अपूरा तृष्णाहरू बोकेर पशुतुल्य अति सामान्य मृत्यु प्राप्त गर्नु शिष्यको लक्षण होइन । परमपूज्य सद्गुरुदेव भन्नुहुन्छ, "सिंहझैं गर्जना गर्ने, विशाल हिमालयसमान दृढ वास्तविक 'शिष्य' बन्ने हो भने घमण्ड, अहङ्कार आदिले अटेसमटेस भएको दुर्गन्धित शिर काटेर मेरो सामु आऊ, म तिमीलाई यस्तो अद्वितीय शिष्य बनाइदिन्छु जो जमीनमा बसी बसी आकाशलाई भेदन गर्न सक्नेछ ।"

कायर, डरपोक व्यक्ति शिष्य बन्न सक्दैन, यो निश्चित छ । जीवनमा गुरु परीक्षा बनेर आइरहेका सानातिना समस्याहरू, झन्झटहरू, रोगव्याधिहरू वा अन्य केही तत्त्वहरूसँग भिड्न डराउने कमजोर मानसिकतायुक्त व्यक्ति शिष्य बन्ने पथमा अग्रसर हुनै सक्दैन । वास्तविक शिष्य बन्नको लागि पार गर्नुपर्ने यात्रा केही कठिनाईहरूले भरिएको हुन्छ, केही आलोचना, केही सङ्घष, केही खिचातानी, केही तनाव र सम्पूर्णरूपमा भित्री अनि बाहिरी गुरु परीक्षाबाट भरिपूर्ण हुन्छ । सद्गुरुका दिव्यतम् प्रहारहरू एकपछि अर्को गर्दै ज्वालामुखी विस्फोट भएझैं मुटु नै कम्पायमान गराउने गरी विष्फोट हुन थाल्छन् । जब आफूसँग भएका सम्पूर्ण कुराहरूको नामोनिसान मेटिएर व्यक्ति रित्तो बन्दछ तब सद्गुरुले त्यस रित्तो ठाउँमा दिव्यतम् ज्ञान, गुण, चेतना आदि भरिदिनुहुन्छ । वास्तविक शिष्यमा हुनुपर्ने सम्पूर्ण सामर्थ्य त्यसपछि उसमा लहलहाउँदछ, हजारौं, लाखौं व्यक्तिलाई ज्ञानसागरमा डुबाई आध्यात्मिक पथको यात्रामा अब उसले सहजै अघि बढाउन सक्दछ ।

यो मेटिने प्रक्रिया अलिकति दुस्कर छ, हजारौं, लाखौंको भीडबाट केवल दुईचार फाट्टफुट्ट व्यक्तिले मात्रै शिष्यत्वको यो यात्रा पार गर्न सफल हुन्छन् । तपाईं घण्टौं साधना गर्नुहोस्, ध्यान गर्नुहोस्, योगासन, प्राणायाम आदि जेसुकै गर्नुहोस्, घरभरि देवीदेवताका तस्विरहरू, गुरुका तस्विरहरू राख्नुहोस्, आरती गाउनुहोस्, धूप, बाल्नुहोस्, पूजापाठ आदि भए भरका साधन अपनाउनुहोस् तर यदि मनको भित्रीभन्दा भित्री कुनामा रौं बराबरको पनि खराब प्रवृत्तिलाई स्थान दिइराख्नुभएको छ भने त्यही खराब प्रवृत्तिको विषाक्त प्रभावले तपाईंको सम्पूर्ण मेहनत र परिश्रमलाई क्रमशः धराशायी पार्दै लाने क्रिया गरिरहेको हुन्छ, सतर्क हुनुहोस् ! साधनामा, ध्यानमा, शिष्यत्वको मार्गमा चाँडोभन्दा चाँडो सफल हुन चाहनुहुन्छ भने सर्वप्रथम रीस र क्रोधरूपी वृक्षलाई जरैसमेत उखेलेर फ्याँकिदिनुहोस्, मैले गुरुकार्य गरें, मैले गरेर फलानो काम बन्यो, मैले गर्दा मेरो परिवार अडेको छ आदि प्रकारका सम्पूर्ण घमण्ड, अहङ्कारलाई त्याग्न सक्ने क्षमता आफूमा ल्याउनुहोस्, अन्य आफूसँगैका दाजुभाइ, दिदीबहिनी वा अन्य व्यक्ति नै किन नहोस्, कसैप्रति पनि इर्ष्या, डाहा गर्ने, उनीहरूको आलोचना गर्ने वा चित्तमा ठेस पुऱ्याउने उद्देश्यले होच्याएर बोल्ने, व्यवहार गर्ने बानीको समूल नाश गर्नुहोस् । यसप्रकारका निम्नकोटिका विचार, भावना वा बानी आदि आफूमा केके छन् ती सबैलाई आफूमाथि कुनै पनि रूपबाट हानी हुन नदिने बलियो मानसिकता बनाउनुहोस् । जबसम्म तपाईंलाई यस्ता प्रकारका दुर्गन्धयुक्त शरीरभावहरू प्रिय लाग्छन् र तपाईंले यिनीहरूलाई जीवनमा बारम्बार अपनाइरहनुहुन्छ तबसम्म बाहिर जति नै साधना, ध्यान, पूजापाठ गरे पनि व्यर्थ छ । कसैले नदेख्ने र थाहा नपाउने

गरी तपाईंले चाल्नुभएको एक एक कुटील, छलयुक्त र स्वार्थयुक्त कदमको बारेमा तपाईंले केही सोच्न भ्याउनुभन्दा अगाडि नै सद्गुरुलाई थाहा भइसकेको हुन्छ । सारा सजीवनिर्जीव, चराचर जगत्को कण कणमा निराकाररूपबाट हरपल विचरण गरिरहनु हुने शिवस्वरूप सद्गुरुदेवलाई छल्न खोज्ने ? शिष्य बन्न अगाडि बढेको व्यक्ति शरीर भावको दलदलमा फँस्न थालेपछि सही र गलतको भिन्नता बुझ्न नसक्ने हुन्छ ।

हरेक क्षण सावधान, सतर्क, चनाखो रहनुहोस् ! समय समयमा आफूलाई आफैंले जाँच्ने गर्नुहोस्, आफूभित्र ध्यानपूर्वक गहिरो गोता लगाउनुहोस्, एउटामात्र विकार फेला पर्नासाथ त्यसलाई हटाइहाल्नुहोस् ।

शिष्य बन्नलाई सहयोग पुग्ने खालका विभिन्न सूत्रहरू भगवत्पाद् शङ्कराचार्यले स्पष्टरूपमा दिनुभएको छ । यी सूत्रहरूलाई अध्ययन, मनन गरी एकपटक आफूलाई जाँचेर हेरौं, आफ्नो जीवनमा यीमध्ये कतिवटा सूत्र तपाईंले समाहित गर्नुभएको छ ? आफ्नो स्तर आफैंले एकपटक जाँचेर हेर्नुहोस् ।

शिष्य बन्न अग्रसर व्यक्ति आत्माबाट, प्राणबाट, हृदयबाट सद्गुरुसँग जोडिएको होस्, गुरुचिन्तन, गुरुसेवा र गुरुयोजना विस्तार गर्ने कार्यबाट अलग्गिने कल्पनामात्रले पनि ऊ भावविह्वल होस्, सद्गुरुको पावन नामको स्मरणमात्रले पनि ऊभित्रको भावरूपी सागर उम्लिएर बाहिर छचल्कियोस् ।

गुरुसेवाप्रतिको इमान्दारीता उसमा यथेष्ट होस्, सद्गुरुको सामुन्ने कहिल्यै ऊबाट अभद्रता, अशिष्टताको प्रदर्शन नहोस्, हरेक क्षण जहाँ भए पनि, जोसँग पनि सदैव विनित एवं नम्ररूपले प्रस्तुत होस् । गुरुसेवा जसको जीवनको अभिन्न अङ्ग होस्, भित्रैबाट प्रण गरी प्राणबाट नै तन, मन, आत्मा गुरुसेवामा लगाउनु नै जीवनको एकमात्र उद्देश्य सम्झेर लागिपरोस् । ज्ञान, गुणरूपी अमृतधाराको उसले नित्य पान गरोस् र जति ज्ञानले भरिपूर्ण हुँदै गएको छ त्यति नै तल, अझ तल झुक्दै जाओस् । मान, सम्मान र पदप्रतिष्ठामा नअलमलियोस् ।

ध्यान, साधना आदिबाट प्राप्त दैवी ऊर्जा लोककल्याणकारी कार्यमा लगाओस्, गुरुको योजना सफलीभूत पार्ने कार्यमा लगाओस् र समस्त विश्वको कल्याण गर्ने कार्यमा लगाओस् । उसले आफ्नो गति, मति सम्पूर्ण गुरुलाई मानोस्, आफूलाई प्राप्त प्रत्येक आज्ञा, आदेश, निर्देशनलाई बिना सोचविचार तत्काल स्वीकृत गर्दै तोकिएको समयभित्र कार्यलाई पूरा गरोस् र यही नै आफ्नो कर्तव्य सम्झोस् ।

गुरुलाई नै आफ्नो इष्ट मानोस्, गुरु नै आफ्नो सर्वस्व ठानोस् ।

उपर्युक्त सूत्रहरू जसले जति चाँडो जीवनमा उतार्न सक्छ, ऊ त्यति नै चाँडो उच्चकोटिको शिष्यमा रूपान्तरण हुन सक्छ । जय गुरुदेव !

# प्रचलित शैव सम्प्रदायहरू

शैवधर्मको उत्पत्ति र विकाससँगसँगै शिवलाई बेग्लाबेग्लै पूजा उपासना गर्ने वा बेग्लै मन र सिद्धान्तअनुरूप शिवभक्त हुने वर्गहरूको पनि विकास भएको पाइन्छ। कालान्तरमा यिनै वर्गहरूद्धारा बेग्लाबेग्लै शैव सम्प्रदायहरूको विकास हुन पुग्यो । शैव आगमहरूमा यस्ता बेग्लै शैव सम्प्रदायहरूको संख्या निर्धारित गरिएको छ। जसअनुसार (१) शैव (२) पाशुपत (३) कापालि (४) कालामुख ।

यसरी जम्मा चार सम्प्रदायहरूको विवरण शैव आगममा परेको छ। कालान्तरमा शैव सम्प्रदायहरूमा अझै बढोत्तरी भएको पाइन्छ जसअनुसार (५) विर शैव वा लिंगायत सम्प्रदाय (६) काश्मिरी शैव्या त्रिकदर्शन सम्प्रदाय (६) योगिनी कौलमार्ग या नाथ सम्प्रदाय आदि पर्दछन् ।

सबै शैव सम्प्रदायहरूमा साझारूपमा 'लकुलिज' लकुलिश या लाकुल आदि सम्प्रदायको संस्थापकको रूपमा र शिवको प्रथम अवतारको रूपमा मानिन्छन् । शंकरका १८ अवतारहरूमध्ये लकुलिन आद्य अवतार मानिन्छन् । राजपुताना र त्यस वरिपरिका क्षेत्रमा लकुलिसका मूर्तिहरू प्रशस्त पाइन्छन् । यसमा लकुलसलाई जटाजूटधारी बायाँ हातमा 'लगुड' (दण्ड) र दायाँ हातमा विजापुरको फूल समातेको देखाइएको छ । लगुड समातेको हुनाले नै यिनलाई लगुलिश, लकल या लकुलिन मानिएको हुन सक्छ ।

वायुपुराण र लिंगपुराणअनुसार युगहरूको अठ्ठाइसौं प्रत्यावर्तनमा मशानमा फ्यालिएको एक मृत शरीरमा प्रविष्ट भएर लकुलिन नामक ब्रह्मचारीका रूपमा आफूले अवतार लिने कुरा शिवद्वार भनिएको पाइन्छ । राजपुतानाको उदयपुरदेखि १४ मिल उत्तरमा एक लिंगजीको मन्दिरछेउमा रहेको एक अभिलेखमा 'भृगुबाट पूजित भएर शिव भृगुकक्ष देशमा एउटा लकटधारीको रूपमा जन्मिनेछन्' भन्ने उल्लेख गरिएको छ। चिन्त्रप्रशस्ति नामले प्रसिद्ध अर्को एक अभिलेखमा 'शिव मद्धारक लकुलिसको रूपमा अवतरित हुनुभयो र 'लाट' देशको कारेहणमा रहनुभयो' भन्ने वाक्यांश पाइन्छ। यस अभिलेखमा पनि लकुलिनका ४ शिष्यहरूको वर्णन परेको छ। जो क्रमश: कुशिक गर्ग, कौरुष्य, मैत्रेय हुन् । यिनै शिष्यहरूबाट शैवधर्मका ४ सम्प्रदाय हुनेछन् भनेर अभिलेखमा उल्लेख गरिएको छ। मैसुर प्रान्तको 'सिरतालुका'मा 'हेमवती' भन्ने स्थानबाट प्राप्त अर्को एक अभिलेखमा लकुलिश आफ्नो नाम र सिद्धान्तको रक्षाका लागि मुनिनाथ चिल्लुकका रूपमा पुन: अवतरित हुनेछन् भन्ने वर्णन गरिएको छ। उपरोक्त अभिलेखमध्ये प्रथम अभिलेखको तिथि ई.९७१ हो भने दोस्रो अभिलेखको तिथि ई. १२७४-१२९३ मानिन्छ र तेस्रोको ई. ९४३ मानिन्छ । मथुराबाट प्राप्त ई. ३८० को शिलालेखमा उदिताचार्यले आफूलाई शिवको दोस्रो भनेका छन्। प्रत्येक अवतारको समय २५ वर्ष निर्धारण गरेमा लकुलिश अवतरित गरेको समय चानचुन १५० ई तिर हुन आउँछ । तर पुराणहरूमा भने उनलाई

वासुदेव कृष्णको समकालीन मानिएको छ ।

जम्मा २८ वटा शैव ग्रन्थहरू शैव सम्प्रदायहरूका मूल ग्रन्थहरू मानिन्छन् । यी आगम ग्रन्थहरू स्वयं महेश्वर र पार्वतीका बीचका कथोपकथनका रूपमा रचना गरिएका हुन् । यसबाहेक सबै शैव सम्प्रदायहरूको निजी साहित्य पनि छ । यस्ता निजी साहित्यहरू भने सम्प्रदायपिच्छेका गुरु वा संस्थापकहरूद्वारा रचिएका मानिन्छन् ।

## शैव सम्प्रदाय

शैव सम्प्रदाय सिद्धान्तअनुसार सृष्टिमा जगतका तीन कारक या रत्न छन् ।

(१) शिव (२) शक्ति (३) विन्दु शिव कर्ता हुन् भने शक्ति 'करण' हुन् । विन्दु 'उपादान' हो । अत: शैव सम्प्रदायका यी ३ रत्नहरू हुन् । जसले यस सम्प्रदायका समर्थकहरूलाई ज्ञान प्राप्तिको प्रेरणा दिन्छन् । शैव सम्प्रदायवादीहरूका लागि शिवका जम्मा दुई शक्तिहरू छन् ।

(१) समवायिनी (२) परिग्रहरूप । 'समवायिनी' शक्ति निर्विकार छ भने 'परिग्रहरूप शक्ति' अचेतन र परिणामशालिनी शक्ति हो यसै शक्तिलाई 'विन्दु' भनिन्छ । यो पनि दुई प्रकारका हुन्छन् : (१) शुद्ध र (२) अशुद्ध । शुद्ध विन्दु महामाया भनिन्छन् भने अशुद्ध विन्दु लाई माया भनिन्छ ।

यी दुई सम्प्रदायलाई मान्दै चानचुन एकसय वर्ष अघिमात्र यो सम्प्रदायको उदय भएको मानिएको छ । वीर शैव सिद्धान्तलाई 'शक्ति विशिष्टाद्वैत'को सिद्धान्त मानिन्छ किनकि यसमा शक्ति विशिष्ट 'जीव' र शक्ति विशिष्ट 'शिव' दुवैलाई परस्परमा एकाकाररूपमा चिन्तन गरिएको छ । स्थूलशक्ति र सूक्ष्म शिवलाई अद्वैत भनिएको छ । यसबाहेक यस मतमा निष्काम कर्मको चिन्तन छ । यसलाई वीरमार्ग भनियो भने शिव मुख्य देवता भएको हुनाले यस मतको नाम नै 'वीर शैव' मत हुन पुग्यो ।

'वीर शैव' मतका विशेषता एवं धार्मिक र व्यवहारिक पक्ष निम्नानुसार शिव तत्त्व ईश्वर तत्त्व नै हो जो सच्चिदानन्दस्वरूप आदि र अन्त्यरहित छ । शिव परम अहमता र स्वतन्त्र छ । शिवको परिभाषा स्थूल शब्दबाट गरिएको छ । सम्पूर्ण ब्रह्माण्ड शिवमा स्थित भएको र उसैमा लीन हुने हुनाले उसलाई स्थल भनिएको हो । समस्त चराचर जगत्, समस्त शक्तिहरू, समस्त प्रकाश पुन्जहरू र समस्त आत्माहरू धारणा गर्ने हुनाले पनि शिवलाई स्थल भनिएको हो । यस अर्थमा शिव समस्त प्राणी लोक र सम्पत्तिको आश्रय हो । परमानन्द चाहनेहरूका लागि शिव परमपद हो । त्यसैले शिव एक तथा अद्वैत स्थल हो । आफ्नो शक्तिमा क्षेम उत्पन्न भएपछि शिवरूपी स्थल दुई भागमा विभक्त हुने गर्दछ । (१) लिंगस्थल (२) अंगस्थल । लिंगस्थल शिव या रुद्र हो जो पूजनीय र उपास्य छ । अंगस्थल पूजक या उपासक जीवात्मा हो । यसैगरी शक्ति पनि आफ्नो इच्छाले नै स्वयम् दुई भागमा विभक्त हुने गर्दछ । एकभाग शिवमाथि आश्रित हुन्छ, जसलाई 'कला' भनिन्छ र अर्को भाग जीवमाथि आश्रित हुन्छ जसलाई 'भक्ति' भनिन्छ । सृष्टि शिवबाट नै हुन्छ र भक्तिको कारण सृष्टि शिवमा नै लीन हुने गर्दछ ।

## शक्तितत्त्व

शक्तितत्त्व भन्नाले शिव नै बुझिन्छ । शिवरूपी यो शक्ति २ भागमा विभक्त छ । सूक्ष्मशक्ति शिव हो भने स्थूलशक्ति जीव हो । तर यथार्थमा दुवै एउटै कुरा हुन्, त्यसैले वीर शैवमतको यस सिद्धान्तलाई 'शति विशिष्टाद्वैत' भनिन्छ । जीवतत्त्व ईश्वर तत्त्वकै स्वरूप हुनाले चराचर जगत नै ईश्वरमय छ । आगो र आगोको पोल्ने शक्ति सरह नै परमात्मा र शक्तिको अवस्था हुन्छ । यस अर्थमा परमात्मा र शक्तिमा सर्वथा अभेद छ । आगोमा पोल्ने शक्ति गुप्तरूपले रहेको हुन्छ । उनीहरूबीचको सम्बन्धलाई 'अविनाभाव' सम्बन्ध भनिन्छ अथवा जुन सम्बन्ध छुट्याउन सकिँदैन, त्यो नै अविनाभाव सम्बन्ध हो । जस्तै, सूर्यबाट उज्यालो ।

## जगततत्त्व

वीर शैव मतअनुसार यो जगत सत्य हो परम शिवबाट उत्पन्न भएकोले सम्पूर्ण चराचर जगत झूटो हुन सक्दैन । जुन प्रकारले फूल र फल वृक्षभन्दा अलग हुँदैन, ठीक त्यसैगरी शिवबाट उत्पन्न यो जगत पनि शिवभन्दा अलग होइन जगत सत्यमात्र होइन नित्य पनि छ । यसप्रकार वीर शैव मत अद्वैतवादी हुँदाहुँदै पनि शंकरको अद्वैतमत 'ब्रह्म सत्यम् जगत् मिथ्या'भन्दा फरक छ ।

## जीवतत्त्व

वीर शैवमतअनुसार जीव पनि शिवको रूप हो यस मतले शिव र जीवमा एक दृष्टिले भेद गर्दछ भने अर्को दृष्टिले अभेद । जसरी अग्नि र ज्वालामा फरक छ, त्यसैगरी शिव र जीवमा फरक छ तर जसरी अग्नि र ज्वाला एकै छन्, त्यसरी नै शिव र जीव पनि एकै हुन्, जीवसम्बन्धी यस मतलाई 'भेदाभेद' मत भनिन्छ जसलाई 'द्वैताद्वैत' पनि भनिन्छ ।

## लिंगतत्त्व

वीर शैवमतावलम्बीहरूअनुसार लिंगका तीन भेद छन् । (१) भाव लिंग (२) प्राण लिंग (३) इष्ट लिंग । भाव लिंग कलाविहीन छ जो श्रद्धाद्वारा साक्षात् हुने गर्दछ । प्राण लिंग कलाविहीन र कलायुक्त छ र खाली आँखाले देख्न सकिन्छ । यी ३ वटै लिंगलाई क्रमश: सत्, चित् र आनन्द पनि भनिन्छ । परमतत्त्व भाव लिंग, सूक्ष्मतत्त्व प्राण लिंग र स्थूलतत्त्व इष्ट लिंग हो ।

अन्त्यमा भण्डारकरका अनुसार लिंगायतहरूमा सर्वोत्कृष्ट वर्ग 'लिंगी' ब्राह्मणहरूको छ । लिंग धारण गर्ने अरू जाति या वर्ग यिनै लिंगी ब्राह्मणहरूका अनुयायी मात्र हुन् । यिनीहरूमा पनि आचार्य र पञ्चम् दुई मुख्य वर्ग छन् जसमध्ये पञ्चम्हरूको वर्गलाई शिवको वास्तविक भक्त भनिन्छ । प्राचीन समयमा भएका वीर शैवमतका पाँच आचार्यहरूबाट पञ्चम्वर्ग विकसित भएको हो ।

सामान्यतया वीर शैवमार्गीहरू ४ श्रेणीमा विभाजित छन् । (१) जंगम् (२) शिलवंत (३) वणिक (४) पञ्चम्शाली ।

वीर शैवहरूमा उपनयन संस्कार सरह नै दीक्षा संस्कार गरिन्छ । दीक्षा संस्कार वास्तवमा शिवलिंग धारण गर्ने संस्कार हो । गायत्री मन्त्रको ठाउँमा 'ॐ नम शिवाय' र यज्ञोपवीतको ठाउँमा गलामा शिवलिंग धारण गरिन्छ । यो संस्कार स्त्री र पुरुष दुवैको गरिन्छ ।

क्रमश: जय गुरुदेव !

# रहस्य तान्त्रोक्त शक्तिपातको

शरीरचक्र, कालचक्र र संसारचक्र यी तीन प्रमुख चक्र मानिन्छन् । यी तीनै चक्रमा गतिप्रवाह निरन्तर भइरहन्छन् । यो गतिप्रवाह अनुकूल-प्रतिकूल पनि हुन सक्छ । शरीरचक्रको स्थिति अनुकूल नभएमा विभिन्न प्रकारका व्याधिहरूले घेर्छन् । शरीरभित्र शरीरचक्र, बुद्धिचक्र र चित्तचक्र स्थापित छन् । निश्चय नै यी तीनैको आपसमा घर्षण चलिरहन्छ, तीनै बेग्लाबेग्लै घुर्णनमा घुम्दछन् । जब तीनै चक्र एउटै गतिमा एकै दिशामा गतिशील हुन्छन् तब प्राणधारिणी महाप्रबोधशाली शक्तिको जागरण हुन्छ जसलाई 'प्रत्यभिज्ञा' अर्थात् 'मेधाधारिणी' भनिन्छ ।

जब तीनै चक्र अर्थात् शरीर, बुद्धि र चित्तको गति भिन्नभिन्न हुन्छ, तब व्यक्तिको मानसिक स्थिति कहिल्यै पनि अनुकूल हुँदैन, ऊ तनावग्रस्त हुन जान्छ । यसको प्रभाव बुद्धिचक्रमाथि पर्छ । यसकारण उसमा स्वनिर्णय लिने क्षमता ह्रास हुन्छ । यी दुवैको प्रभाव शरीरमा परेपछि शरीरले बुद्धि र चित्तअनुकूल कार्य गर्दैन । त्यसपछि शरीरमा विकार उत्पन्न हुन्छ । यसरी नै शरीरको विकारले चित्तशक्तिलाई प्रभावित गर्दछ र चित्तशक्तिले बुद्धिलाई अर्थात् ज्ञानशक्तिलाई प्रभावित गर्दछ ।

संसारचक्र र कालचक्र त नियमितरूपले गतिशील रहन्छ नै, ती चक्रहरूका साथ व्यक्ति स्वयंले आफ्ना तीनै चक्रका साथ कसरी समायोजन गर्छन् भन्ने कुरा सबैभन्दा महत्त्वपूर्ण कुरा हो । कालचक्र र संसारचक्र परमात्माले बनाउनुभएको हो । यसैप्रकार परमात्माले व्यक्तिको निर्माण गर्नुभएको छ । तर व्यक्तिले आफ्ना तीनै चक्र शरीरचक्र, बुद्धिचक्र र चित्तचक्रको सामञ्जस्य कालचक्र र संसारचक्रसित गर्न सक्दैन । यहीँबाट शक्तिको पतन प्रारम्भ हुन्छ । प्रकृतिको नियमअनुसार माथिबाट तल अर्थात् उँधो बग्नु सजिलो हुन्छ, जलधाराको सरल प्रवाह हिमालयबाट शुरु भएर समुद्रमा विलीन हुन्छ । तलतिर अर्थात् पतनतिर जानु धेरै सजिलो हुन्छ । यसमा व्यक्तिलाई आफूमाथि नियन्त्रण गर्ने आवश्यकता पर्दैन । जे जसरी चलिरहेको छ, त्यसरी नै चल्दछ भने बिस्तारै शरीरस्थित तीनै चक्रहरूको गति उच्चताबाट निम्नतातिर प्रवाहित हुन्छ । यसमा व्यक्ति स्वयंले केही गर्दैन, उसले आफूलाई कालचक्र र संसारचक्रको भरोसामा छोड्छ ।

कुण्डलिनी शक्ति अनन्त शक्तिसम्पन्न, अद्वितीयस्वरूप, चक्रस्वरूपधारिणी, जाग्रत, भगवती महाशक्ति हो । यो आधारभूता शक्ति हो– यो शक्ति उँधोबाट उँभोतिर ऊर्ध्वगतिले बढ्दछ । यहाँ व्यक्तिले साधक बनेर अभ्यास गर्नुपर्ने हुन्छ किनकि उसले आफ्नो जीवनमा केही जानेको, सुनेको छ र त्यसलाई एउटा नयाँ दिशा दिनु पर्दछ ।

शक्तिको स्खलन उँधोतिर हुनु अति नै सजिलो हुन्छ । यसलाई संसारमा जताततै देख्न सकिन्छ । तर जो बुद्धिमानका साथै ज्ञानवान् छ, उसले आफ्नो चित्तशक्ति र बुद्धिशक्ति दुवैको चक्रलाई शरीरचक्रसित सामञ्जस्य स्थापित गरेर उँभो उठाउँछ । त्यसपछि उसले अभ्युदयशक्ति प्राप्त गर्दछ । यसपछि मात्र ऊ परमानन्दबाट पूर्ण हुन सक्छ ।

व्यक्तिको निधारमा ३२ विन्दु हुन्छन् जसमा १६ विन्दु व्यक्तिको आध्यात्मिक जीवनसित सम्बन्धित हुन्छन् र बाँकी १६ विन्दु जीवनका भौतिक सम्भावनाहरूसित सम्बन्धित हुन्छन् । ठीक यसरी नै हत्केलाको बूढीऔंलाको पहिलो पोरमा १६-१६ विन्दु विद्यमान् छन् । समर्थ गुरुले कृपापूर्वक आफ्नो औंलाका यस विन्दुहरूको तादात्म्य साधकको निधारका विन्दुहरूसित स्थापित गर्दै शक्ति प्रवाहित गर्नुहुन्छ । यो एउटा योगरहस्य क्रिया हो । कुन विन्दुलाई कति र कसरी दबाउनुपर्छ, यो त योगको अति नै गूढ र जटिल रहस्य हो जसलाई ब्रह्मत्त्व सिद्धिपछि मात्रै बुझ्न सकिन्छ । निधारका यी विन्दुहरूको सम्बन्ध शरीरका अन्य नाडीहरूसित र अन्य चक्रहरूसित हुन्छ । यसरी निधारको स्पर्शमात्रैले पनि शरीरका समस्त सुप्त चक्रहरूलाई ऊर्जा प्रदान गरिन्छ । बेग्लाबेग्लै दीक्षाहरूमा यिनै विन्दुहरूलाई स्पर्श गर्दै सम्बन्धित चक्रहरूलाई जाग्रत गर्नुपर्ने हुन्छ जसबाट साधकको अभिष्ट सिद्ध हुन्छ ।

शक्तिपातका लागि पहिले जिज्ञासा, फेरि निष्ठा, फेरि अभ्यास र त्यसपछि शक्तिपातका ज्ञाताबाट यस ऊर्ध्वगतियुक्त शक्तिपातलाई प्राप्त गर्नु नै आत्मकल्याणकारी मार्ग हो । यी चारै स्थितिहरूमा कुनै एउटामा मात्रै कमजोरी वा कमी भएमा तान्त्रिक क्रियाबाट ऊर्ध्व शक्तिपात हुन सक्दैन ।

सद्गुरुले जब शिष्यमा जिज्ञासा, निष्ठा र अभ्यासको गुणलाई पूर्णरूपमा देख्नुहुन्छ तब उहाँ सहजरूपमा प्रसन्न हुनुहुन्छ र शक्तिपातको क्रियालाई प्रारम्भ गर्नुहुन्छ ।

**परिपक्वमला ये तानुत्सदन हेतु शक्ति पातेन, यदा यस्य तदा यस्य विमुक्तिर्नात्र संशयः ।**

वस्तुतः सद्गुरुले करुणापूर्वक शिष्यको सेवाबाट प्रसन्न भएर 'शक्तिपात'द्वारा उसलाई स्वयंवत बनाउनुहुन्छ । श्री शंकराचार्यले यस सम्बन्धमा 'शतश्लोकी'को प्रारम्भमा एउटा सुन्दर वर्णन गर्नुभएको छ–

**दृष्टान्ता नैव दृष्ट स्त्रिभुवन जठरे सद्गुरोर्ज्ञान दातु:, स्पर्शश्चेदत्र कलप्य: सदयति यदहो स्वर्णतामश्म सारम् । न स्पर्शत्वं थापि श्रित चरणयुगे सद्गुरु: स्वीयशिष्ये, स्वीयं साम्यं विधत्ते भवति निरुपम स्तेन वा लौकिो,पि ॥**

अर्थात् यस त्रिभुवनमा गुरुको उपमा दिनलायक कुनै दृष्टान्त छैन, गुरुलाई पारसको उपमा दिन सकिन्न किनकि पारसले सुन मात्रै बनाउँछ, वस्तुलाई भने पारस बनाउन सक्दैन। तर सद्गुरुले त शिष्यलाई स्वयं समान् बनाउनुहुन्छ ।

यसै प्रसन्नताको वेगमा शक्तिपात गर्नुभएपछि मैले शिष्यलाई शक्तिले प्रबुद्ध, प्रखर र परिपूर्ण गरेँ भन्ने सद्गुरुलाई प्रसन्नता हुन्छ। त्यसबेला शिष्य गुरुकृपाबाट रोमाञ्चित हुन्छ । शिष्यको प्रसन्नता देखेर गुरु पनि प्रसन्न हुनुहुन्छ किनकि त्यसबेला शिष्यका लागि शक्तिको ऊर्ध्व खुलेको हुन्छ ।

समर्थ गुरुले आफ्ना शरीरका नाडी एवं तन्तुहरूलाई आलोडित-विलोडित गरेर साधकको निधारमा औँला राख्नुहुँदै उसलाई आत्मस्थ गर्नुहुन्छ, त्यसपछि उसको शरीरमा धारणशक्तिलाई जाग्रत गर्नुहुन्छ जसबाट साधकले गुरुद्वारा प्रदान भएको शक्तिपातलाई सुरक्षित राख्न सक्छ । यसप्रकारको क्रियामा गुरुले तीब्र तपस्या ऊर्जालाई प्रवाहित गर्नुपर्ने हुन्छ। तर यसप्रकारको क्रिया उहाँ यथासम्भव नगर्ने भए पनि शिष्यप्रति करुणाले आपूरित भएर आफ्नो रगतलाई निचोडेरै भए पनि ऊर्ध्वगति प्रदान गर्नु सद्गुरुको चिनारी हो । यस्तो केवल सद्गुरुले मात्रै गर्नुहुन्छ ।

सद्गुरुले आफ्नो शिष्यमा शक्ति संचार गरेर उसको सुप्त कुण्डलिनीलाई अनायास नै जाग्रत गर्नुहुन्छ । सद्गुरुको तान्त्रोक्त शक्तिपातबाट शिष्य अनुग्रहित भएपछि उसको शरीरद्वारा स्वयं नै आसन, प्राणायाम, क्रिया, मुद्रा, ज्ञान, ध्यान प्रारम्भ हुन जान्छ ।

अन्य यौगिक आसन, प्राणायाम, मुद्रा आदिको अभ्यास कुण्डलिनी शक्तिलाई जगाउनका लागि गरिए पनि यो कहिले सफल हुन्छ भने कहिले असफल । तर तान्त्रोक्त शक्तिपातद्वारा कुण्डलिनी पहिल्यै जाग्रत गरिन्छ र त्यसपछि साधकको शरीरभेद, संस्कारभेदअनुसार एवं आवश्यकतानुसार स्वत: नै आसन, प्राणायाम, यम, नियम, प्रत्याहार, ध्यान आदि क्रिया चालित हुन्छ । यसका लागि शिष्यलाई यी सबै कुराको पूर्वज्ञान हुनुपर्छ भन्ने जरुरी हुँदैन ।

तान्त्रोक्त शक्तिपात प्राप्त भएपछि पनि निरन्तर अभ्यास, जिज्ञासा र निष्ठा हुनुपर्दछ तबमात्रै साधकले आफ्नो आत्माको सत्तालाई प्रत्यक्ष अनुभव गर्दै आत्मबोधबाट विभोर हुन सक्छ र यस आत्मबोधले दिव्यशक्तिको स्वरूप ग्रहण गर्दछ। अत: साधकले निरन्तर स्थिरताका लागि क्रियाशील हुनुपर्दछ । यो आत्मशक्तिको स्थिरता आलम्बिनी मुद्राद्वारा प्राप्त हुन्छ। यही षड्चक्रजागरण कुण्डलिनी महामाया शक्ति हो ।

जय गुरुदेव !

# सपना भित्रको रहस्य

सपनाको बारेमा हजारौँ वर्षअघिदेखि शोध, अनुसन्धान हुँदै आइरहेको छ । तर पनि अहिलेसम्म यसको रहस्य जस्ताको तस्तै रहेको छ। सपनाले वास्तविक जीवनमा पनि कुनै महत्त्व राख्छ या राख्दैन ? केही मानिसहरू यसलाई मनको विकृति बताउँछन् भने केही मानिसहरूको धारणामा सपना वास्तवमा नै भविष्यको पथप्रदर्शक हो । जहाँ व्यक्ति अल्झिन्छ, कुनै बाटो नपाई अन्यौलमा पर्दछ, तब सपनाले उसलाई मद्दत गर्दछ ।

वैज्ञानिकहरूको भनाइ छ– हाम्रो मष्तिस्कको वरिपरि चौबीस करोड रक्तवाहिनी र शिराहरूको मोटो गुजुल्टो बनेको छ जसले मानवको चेतन अचेतन, दृश्य अदृश्य विम्बलाई लिन्छ र त्यसमा सुरक्षितरूपमा जम्मा गरेर राख्दछ । समय आएपछि तिनै विम्बहरू नै सपनाको आकार लिएर व्यक्तिसामु उपस्थित हुन्छन् ।

रुसी वैज्ञानिकहरूका अनुसार सपनालाई व्यर्थैको ठानेर नकार्न सकिँदैन । वास्तवमा सपना पूर्णरूपले यथार्थ र वास्तविक हुन्छ । यो अलग्गै कुरा हो यसको समीकरण, सिद्धान्त र अर्थलाई हामी बुझ्न सक्दैनौं । अर्को कुरा सपना केही क्षणको लागि मात्र आउँछ र अदृश्य हुन्छ जसबाट प्रात:काल उठ्दा व्यक्तिले ती सपनाहरूलाई बिर्सन्छ तर यो कुरा निश्चित हो कि एउटा स्वस्थ व्यक्तिले प्रत्येक रात तीनदेखि लिएर सातपटकसम्म सपना देख्छ ।

अमेरिकाका प्रसिद्ध स्वप्न विशेषज्ञ जर्ज हिचले आफ्नो पुस्तक 'ड्रिम'मा सप्रमाण स्पष्ट पारेका छन् कि व्यक्तिले सपनाको माध्यमबाट आफ्नो जीवनमा पूर्णता प्राप्त गर्न सक्छ । हाम्रो जीवनका जति पनि अप्ठ्याराहरू छन्, समस्याहरू छन्, ती सबैको हल सपनासँग छ र प्रकृतिले मानवशरीरको रचना यसप्रकारले गरेकी छिन् कि जहाँ मानवको जीवनमा रहस्य, पीर, चिन्ता, बाधा र झंझट, झमेला छ, त्यहीँ यी समस्याहरूको हल पनि प्रकृतिले सपनाको माध्यमबाट दिइरहेकी हुन्छिन् । मानवशरीरभित्र दुई प्रकारका स्थितिहरू छन्– चेतन मन र अचेतन मन । चेतन मनले बाहिरी दृश्य र परिवेशलाई स्वीकार गरी जम्मा गर्दछ भने अचेतन मन हाम्रा पूर्वजन्मका घटनाहरूसँग सम्बन्धित रहन्छ । मानिसको जन्म बारम्बार हुन्छ र विगत जीवनका कार्य, दृश्य र घटनाहरूको प्रभाव पनि यस जीवनमा पर्दछ, त्यसलाई वहन गरिरहेको हुन्छ भन्ने कुरामा दुईमत छैन । यो अचेतन मन नै सपनाको वास्तविक आधार हो र यो मनसँग आफ्नो कुरा बताउने, सम्झाउने, बुझाउने अरू कुनै बाटो छैन । फलस्वरूप उसले निद्राकालमा मानवलाई चेतावनी पनि दिन्छ र ती दृश्यहरूलाई स्पष्ट पनि गरिदिन्छ । यसरी उसको पथप्रदर्शन पनि गर्दछ । यस दृष्टिबाट अचेतन मन नै व्यक्तिको लागि ज्यादा सहयोगी र जीवन निर्माणमा सहायकसिद्ध हुन्छ भन्न सकिन्छ ।

हाम्रो जीवनका कुनै पनि घटना व्यर्थ हुँदैनन् । सावधान र सतर्क व्यक्तिले प्रत्येक घटनाबाट फाइदा उठाउँछ अर्थात् कुनै पनि घटनालाई व्यर्थै ठानेर उसले छोड्दैन । जीवनमा सफलता र पूर्णता प्राप्त गर्नुछ भने चेतनावस्थामा जीवनका कार्य र प्रयत्न सहायकसिद्ध त हुन्छन् नै, यसबाहेक सपनाको माध्यमबाट पनि आफ्नो समस्या निराकरण गर्न सकिन्छ । संसारमा हेर्ने हो भने सपनाले व्यक्तिको जीवनमा धेरै ठूलाठूला परिवर्तनहरू ल्याएका कैयौँ उदाहरणहरू पाइन्छन् । यतिमात्र होइन, सपनाले वैज्ञानिक खोज र अनुसन्धानमा पनि महत्त्वपूर्ण योगदान दिएका छन् । फ्रान्सका प्रसिद्ध दार्शनिक डि मार्गरिसको यस्तो बानी बसेको थियो कि उनी बारम्बार काममा जुटिरहन्थे र काम गर्दै जाँदा जब गणितको कुनै समीकरण वा विज्ञानको कुनै समस्याको समाधान प्राप्त हुँदैनथ्यो, तब उनी त्यहीं सुतिदिन्थे र सपनाबाट त्यस समस्याको समाधान उनलाई प्राप्त हुन्थ्यो ।

वास्तवमा नै सपना आफैँमा एउटा अलग्गै विज्ञान हो । कहिलेकाहीँ सपना सीधा र स्पष्टरूपबाट आउँदैनन् तर गूढ रहस्यको रूपमा देखिन्छन् र यसको मानिसलाई स्मरण रहन्छ । यस्तो अवस्थामा व्यक्तिले त्यस सपनाको अर्थलाई बुझ्ने प्रयास गर्नुपर्दछ अथवा सपना

विशेषज्ञसँग सल्लाह लिएर त्यसैअनुसार समस्याको समाधान प्राप्त गर्नुपर्दछ ।

सिलाई मेसिनका आविष्कारक इलिहास होव आफ्नो सिलाई मेसिन बनाउन व्यस्त थिए । दुई वर्षको परिश्रमपछि पनि उनले सफलता हात पार्न सकेका थिएनन् । जहिले पनि छेउबाट धागो छिराउँथे र मेसिनले सिलाई गर्न सक्दैनथे । त्यस्तैमा एकदिन प्रयास गर्दागर्दै केही नलागेपछि उनी त्यहीं सुते । त्यस रात उनले सपनामा देखे कि एउटा राक्षस आएर उनलाई रूखमा बाँध्यो । त्यस राक्षसले आफ्ना अनुचरहरूलाई आज्ञा दियो कि यसको शिरको ठीक बीच भागमा भाला रोपिदिनू । अनुचरहरूले पनि त्यसै गरे । त्यति नै बेला होवको आँखा खुल्यो । डरले उनको शरीर काँपिरहेको थियो । सारा शरीर पसीनाले भिजेको थियो । उनले सपनाको अर्थ विश्लेषण गर्न थाले । सोच्दै जाँदा उनले आफ्नो समस्याको समाधान त्यही साङ्केतिक सपनाको माध्यमबाटै प्राप्त गरे कि सियोमा छेउबाट धागो हाल्नुको अपेक्षा सियोको बीचमा नै प्वाल पारिदियो भने सिलाई गर्नका लागि सफलता प्राप्त हुन सक्दछ । बिहान उठेर उनले त्यसै गरे र सफलता प्राप्त गरे । फलस्वरूप संसारले सिलाई मेसिन उपहारको रूपमा पायो ।

अमेरिकाका परावैज्ञानिक मि. डब्लु लोहवी नाडी संस्थानका संवेगहरूको अध्ययनमा जुटेका थिए । यस समस्याको हल उनलाई प्राप्त भइरहेको थिएन । एकरात उनले सपनामा देखे कि कसैले उनको शरीरलाई भालाले रोपिरहेको छ । यत्तिकैमा उनको आँखा खुल्यो । यसैबाट उनले आफ्नो समस्याको समाधान प्राप्त गरे कि संवेगहरूको प्रवाह बराबर वर्तुल दवाबको कारणबाट नै सम्भव हुन्छ र यही पद्धतिलाई अपनाएर नै उनले आफ्नो काम अघि बढाए । पछि उनले आफ्नो क्षेत्रमा पूर्ण सफलता प्राप्त गरे र यही खोजका लागि नोबेल पुरस्कारसमेत प्राप्त गर्न सफल भए ।

अमेरिकाका मि. डोरोथीले बारम्बार एउटै सपना देख्थिन् । उनी सधैं गेरुवस्त्र धारण गरेर पहाड चढिरहन्थिन् । हिउँमाथि पनि आरामले हिँड्थिन् । पहाडमुनि हजारौं मानिसहरू उनको जय जयकार गरिरहेका हुन्थे ।

उनले केही पनि बुझिरहेकी थिइनन् । सपनामा पहाड चढ्ने बेलामा उनीसँगै एउटा अत्यन्तै भव्य, तेजस्वी संन्यासी पनि गेरुवस्त्र धारण गरी पथप्रदर्शन गर्दै हिँडिरहेका थिए । यत्तिकैमा उनको आँखा खुल्न गयो ।

पूर्ण भौतिकता एवं विलासितामा रहेकी, करोडपति बाबुकी छोरीको लागि यो अचम्मको सपना थियो । उनले यसको अर्थ बुझ्न सकिरहेकी थिइनन् तर पनि यो सपना बारम्बार आइरहन्थ्यो । एकदिन उनी सपनाकै आधारमा भारतको टिकट काटेर दिल्ली आइरहेकी थिइन् ।

उनले छ महिनासम्म भारतका महत्त्वपूर्ण तीर्थस्थलहरूको भ्रमण गरिन् तर उनलाई उक्त संन्यासीको दर्शन प्राप्त हुन सकेन जसलाई उनले सपनामा देखेकी थिइन् । उनी उक्त अज्ञात, अनाम, अपरिचित संन्यासीको खोजीमा धेरै समयसम्म लागिरहिन् । सन् १९८३ अप्रिलमा एउटा साधना शिविरमा उनले कसैको प्रेरणाद्वारा भाग लिने निश्चय गरिन् । त्यहाँ उनले देखिन् कि जो संन्यासी बारम्बार उनको सपनामा आइरहेका थिए, उनैलाई आफ्नो अगाडि उभिइरहेको पाइन्– त्यही अनुहार, त्यही मुस्कुराहट, त्यही हिँडाई । उनलाई यस्तो लाग्यो कि यी संन्यासीसँग त उनी कैयौं वर्षदेखि परिचित थिइन्, र उनी उनको चरणमा परिन् ।

यसपछि डोरोथीले उक्त संन्यासीसँगै हिमालयका विभिन्न स्थानहरूको यात्रा गरिन् । त्यस दौरान उनलाई यस्तो लाग्यो कि सबै स्थान र दृश्य हुबहु त्यस्तै छन् जुन उनले पहिले सपनामा देखेकी थिइन् । संन्यासीसँगै अघि बढ्दै जाँदा उनले सपनामा देखेअनुसार उनले सबै कुरा बताउँदै गइन् । अलिकति अगाडि बायाँतिर सपनामा देखेको गुफा पनि त्यहाँ देखियो । यसप्रकार यस्ता सयौं घटनाहरू छन् जसले सपनाको वास्तविकता र वैज्ञानिकतालाई पुष्टि गर्दछन् ।

सपना हाम्रो जीवनको उपलब्धि हो । वैज्ञानिकहरूका अलावा कैयौं लेखकहरूले पनि सपनाबाट प्रेरणा लिएर आफ्नो रचनालाई पूर्णता दिएका छन् । स्कटल्याण्डका प्रसिद्ध लेखक एल स्टीभेन्सनले त आफ्नो प्रसिद्ध उपन्यास 'डिवाइन' सपनाको आधारमा नै लेखेका हुन् । सपनामा उनले जे पढ्थे, त्यसैलाई कागजमा लेख्थे । यसरी त्यो उपन्यास तयार भयो र सातभन्दा बढी अन्तर्राष्ट्रिय पुरस्कारहरू पनि प्राप्त गऱ्यो । कैयौं उच्चकोटिका सङ्गीतकारहरूले पनि आफ्ना नयाँ नयाँ धुनहरू सपनाकै माध्यमबाट सृजना गरेका छन् । विश्वविख्यात् सङ्गीतकार मोजार्टले आफ्नो प्रसिद्ध धुन 'विथवन' सपनाद्वारा प्राप्त गरेर बनाएका हुन् ।

वास्तवमा नै सपना पूर्णरूपले विज्ञान हो जसलाई राम्रोसँग बुझ्नु जरुरी हुन्छ । यसका गूढ रहस्यहरू र यसमा निहित हललाई बुझ्नु जरुरी हुन्छ । पश्चिममा त सपनामाथि यति धेरै पुस्तकहरू लेखिएका छन् कि ती सबैलाई एकत्रित गर्ने हो भने एउटा ठूलो पुस्तकालय भरिन सक्छ । यसैगरी कैयौं संस्थाहरू छन् जहाँ सपनाको विश्लेषण हुने गर्दछ । हाल आएर भारतवर्षमा पनि फाट्टफुट्ट यससम्बन्धी पुस्तकहरू लेखिन थालेका छन् ।

सपनाको भाषा सामान्य भाषा हुँदैन । जब सपना देखिन्छ तब अन्तर्मनमा अङ्कित तथ्य नै बाहिर आउने गर्दछ । अन्तर्मन हाम्रो वर्तमान जीवनसँग पनि जोडिएको हुन्छ र यस जीवनभन्दा अगाडिका जीवनहरूसँग पनि यसको सम्बन्ध रहेको हुन्छ । यसैले त्यस अन्तर्मनद्वारा जुन सन्देश प्राप्त हुन्छ, कहिलेकाहीं हामीलाई ती रहस्यमय र काल्पनिक लाग्न सक्छन् । परन्तु कुनै पनि सपना व्यर्थ हुँदैन । प्रत्येक सपनाको एउटा निश्चित अर्थ र उद्देश्य हुन्छ । यदि हामीले ती उद्देश्य र अर्थहरूलाई बुझ्यौं भने आफ्नो जीवनलाई ज्यादा अनुकूल एवं सुखमय बनाउन सक्दछौं ।

जय गुरुदेव !

## हेर्दा सामान्य तर असामान्य पद्धति

# पानीबाट उपचार

– डा. हरिप्रसाद पोखरेल
*वरिष्ठ विशेषज्ञ*
*योग तथा प्राकृतिक चिकित्सा*

वैदिक र पूर्ववैदिककालदेखि नै रोग निवारण एवं स्वास्थ्य रक्षाका लागि जलको समुचित प्रयोग हुँदै आएको पाइन्छ । जल या पानी मानिस, पशुपंक्षीमात्र होइन वनस्पतिका लागि पनि दिनरात नभई नहुने चिज हो । योग, प्राकृतिक चिकित्सा, आयुर्वेदजस्ता प्राचीन स्वास्थ्य ग्रन्थहरूमा जलको व्यापक खोज र प्रयोग पाइन्छ । भिन्नभिन्न ठाउँ र भिन्नभिन्न अवस्थामा पाइने जलको गुण, दोष र प्रभावका बारेमा यी प्राचीन ग्रन्थहरूले विषद् खोज गरेका छन् । हाम्रा प्राचीन स्वास्थ्याचार्यहरूले जलचिकित्साको कला, संस्कृति र विज्ञानलाई बुझेर जीवनशैलीको एक अंगकै रूपमा स्थापित गरेका थिए । वैदिक ऋचाहरूले यस कुरालाई पुष्टि गरेका छन् । यस्ता कैयन अन्य ऋचाहरू पनि छन्–

**आप इद्वा उभेषजोरायो अभीव चातकीः ।**
**आपस् सर्वस्य भषेजोस्तास्तु कृण्वन्तु भेषजम् ॥**

(ऋग्वेद ९०/१३७/६)

**भावार्थः** जल नै औषधि हो । जलले रोग नाश गर्दछ । यसले सबै रोगलाई नाश गर्दछ । अत: यसले तिम्रो रोगलाई पनि नाश गर्दछ ।

**आपो इद्वा भेषजोरायो अभीव चातनीः ।**
**आपस सर्वस्य भेषजोस्तास्ते मुञ्जन्तु सौत्रयः ॥**

(अथर्ववेद ३/७/५)

**भावार्थः** जल नै औषधि हो । जलले रोग नाश गर्दछ । जलले सबै रोगलाई भगाउँछ । यो जलले तिमीलाई पनि कठीन रोगको पञ्जाबाट बचाउनेछ ।

**अप्स्वन्तरमृतं भेषजम् । अपामृत प्रशस्तये ॥**

(ऋग्वेद १२/३/१९)

**भावार्थः** जलमा अमर बनाउने शक्ति छ । जलमा रोग मुक्त गराउने गुण छ ।

**आपो हिष्टामयो भुवः । तान ऊर्जे दधातन । महेरणायचक्षसे ॥**

(ऋग्वेद १०/९/१)

**भावार्थः** हे जल ! तिमी हाम्रो स्वास्थ्यका कारण हौ । अत: हामीलाई यस्तो स्वास्थ्य र शक्ति प्रदान गर जसद्वारा हामीले सत्यको सुगम मार्ग प्राप्त गर्न सकौं ।

आधुनिक औषधि चिकित्साप्रणालीका जन्मदाता मानिने हिपोक्रेटिज (४६० देखि ३७७ वर्ष इसापूर्वका) ले पनि आफ्नो जीवनभर प्राकृतिक नियमका साथ रोगोपचार गर्ने कुराको प्रचार गर्नुभयो । प्राकृतिक चिकित्सा र त्यसमा पनि जल चिकित्साको बारेमा यथेष्ट प्रयोगहरू गर्नुभयो । यसो हुँदाहुँदै पनि जल चिकित्साको आधुनिक इतिहास सन् १८२९ मा ग्रेफेनवर्गको एक चिकित्सागृहबाट शुरु हुन्छ । यस चिकित्सागृहले चिसो पानीको प्रयोगबाट हजारौं रोगीलाई निको पार्‍यो र चिकित्सा जगतमा हलचल ल्यायो । यसको श्रेय विंसेज प्रिस्निज (Vinceng Priestniz) नामक किसानलाई जान्छ । सबैले साधारण बुद्धिको र अशिक्षित भनेर हेला गरेको यस सृजनशील व्यक्तित्वले आश्चर्यजनक कार्य गर्न सफल भयो । यो चिकित्सागृहमा संसारका मानिस हुल लागेर आउन थाले र उनको प्रसिद्धिले आत्तिएका पुरातनपन्थी चिकित्सक एवं अन्य मान्छेहरूले उनलाई दु:ख दिन शुरु गरे । गाली, बेइज्जतीदेखि अदालतको चक्कर काट्ने कामसम्म गर्नुपर्‍यो । विरोधीहरूको झूठो र अमानवीय कार्यहरूले प्रिस्निजको कार्यमा कुनै कमी आएन । निको भएका बिरामीले दिनानुदिन उनको कीर्ति र प्रतिष्ठालाई बढाए । क्रमश: जोहोन स्क्राथ, सेवेस्टियन क्नाईप, आरनाल्ड रिक्ली, लूई कुने, जे.एच. केलाग, हेनरी लिण्डल्हारजस्ता महान् व्यक्तिहरूले जल चिकित्साको क्षेत्रमा उल्लेखनीय योगदान गर्नुभयो ।

यसरी जल चिकित्साले आफूलाई सम्वृद्ध गर्दै आएको छ । यस जल चिकित्सामा स्वास्थ्यको रक्षा गर्ने र रोगीको रोगोपचार गरेर स्वस्थ बनाउने सयौं सरल, सहज र सार्वभौम सूत्रहरू रहेका छन् । वाष्पस्नान, कटिस्नान, रीढस्नान, पादस्नान, हस्तस्नान, कुहिनास्नान, फोहरा स्नान, सर्वाङ्गस्नान, चिसोपट्टि, सेक, एनिमा, कुञ्जल, जलनेति आदि सयौं उपचार विधिविज्ञान जलचिकित्साभित्र रहेका छन् । यसमध्येका सरल र महत्त्वपूर्ण उपचार विधिहरूको चर्चा यहाँ गरिन्छ ।

जलचिकित्सा सस्तो र दीगो स्वास्थ्यसेवा हो । यसको समुचित प्रयोग गर्न सिकाउने हो भने प्रत्येक व्यक्तिले आफ्नो स्वास्थ्यको रक्षा र रोगोपचार सरलरूपमा घरमै बसेर गर्न सक्दछ ।

# जलनेति

नेतिमा प्रयोग हुने विभिन्न थरीका टुटीदार भाँडाहरु

## परिचय

प्राचीन योगीहरूले स्थूल शरीरको शुद्धिकरणका लागि छवटा वैज्ञानिक यौगिक प्रक्रियाहरूको विकास गरे जसलाई 'षट्कर्म' भनिन्छ । षट्कर्मभित्रको महत्त्वपूर्ण कर्म वा प्रक्रिया, जसद्वारा नासिकाप्रदेश या नाकको शुद्धीकरण गरिन्छ, लाई नेति भनिन्छ। नेति धेरै प्रकारका छन् । त्यसमध्ये सबैभन्दा सरल र सबैभन्दा महत्त्वपूर्ण जलनेति हो । प्राचीन समयमा नेपाली करुवा यही नलनेतिका लागि बनेको यन्त्र या भाँडा थियो । यही नेपाली करुवा वा यस्तै टुटीदार भाँडाको माध्यमले सफा पानी नाकको एउटा प्वालबाट हाल्ने र अर्को प्वालबाट झार्ने गरी नाक सफा गर्ने विधिलाई जलनेति भनिन्छ ।

## विधि

१. नेपाली करुवा वा यस्तै जलनेतिका लागि बनेको टुटीदार भाँडा लिने ।
२. उमालेर मनतातो (शरीरको तापक्रम बराबर) भएको पानी १ लिटरमा आवश्यकताअनुसार १ देखि २ चियाचम्चा नुन मिलाउने ।
३. करुवा वा जलनेतिको भाँडामा तयार पानी भर्ने । सो भाँडाको टुटी बिस्तारै नाकको बायाँ प्वालमा राख्ने । टाउकालाई बिस्तारै दाहिनेतिर झुकाउने । अब भाँडालाई बिस्तारै माथि उठाउँदै जाने । पानीको प्रवाह नाकको बायाँ प्वालतर्फ होस् । भाँडालाई माथि उठाउँदै जाँदा भाँडाको मुखबाट पानी पोखिने हुनुहुन्न ।

४. नाकको बायाँ प्वालबाट पानी पठाएमा दाहिने प्वालबाट बाहिर आउँछ । यसरी नै फेरि दाहिने प्वालबाट टोटी जोडेर पानी पठाउने र टाउको बायाँतिर झुकाउने गरेमा बायाँ प्वालबाट पानी आउँछ । यसरी दुवै प्वालबाट आवश्यकताअनुसार आधा आधा लिटर पानी पठाउने ।
५. नाकको प्वालबाट पानी पठाउने कार्य पूरा भएपछि नाकलाई सुख्खा बनाउन साथै पानीले घोलेको नाकभित्र जम्मा भएका फोहरहरूलाई निकाल्न एउटा विधि सम्पन्न गर्नुपर्दछ ।
दुवै खुट्टा एक आपसमा मिलाएर सिधा उभिने । दुवै हातलाई कानको नजिकै लगेर औंलाले कान बन्द गर्ने । अब कम्मरबाट शरीरलाई अगाडि झुकाउने । टाउको माथि उठाउने । यसपछि टाउको माथि तल, दायाँ बायाँ गर्दै जोडजोडले श्वास फ्याँक्ने । यसले नाकभित्रको फोहर र पानी निकाल्न सहयोग गर्दछ ।
६. अब जलनेति पूरा भयो । हातमुख धोएर केही बेर आँखा बन्द गरेर आराम गर्ने ।

## सावधानी

१. नाकमा जलनेतिको भाँडाको टोटी जोड्नुका साथै मुख खोलेर मुखबाट श्वास प्रश्वास शुरु गर्नुपर्छ । नाकबाट पानी पनि राख्ने र श्वास प्रश्वास पनि गर्नाले पानी फोक्सोतर्फ गई दुर्घटना हुन सक्छ ।
२. विधि नं. ५ मा भनेजस्तै गरी नाकलाई पूरा सुख्खा बनाउने । नाकभित्र पानी रह्यो भने जलनेति गरेको केही समयपछि टाउको दुख्ने, रुघा लागेजस्तो हुने र अन्य असुविधा हुन सक्छ । नाकको पानी सफा गर्ने क्रममा बूढीऔंला र चोरीऔंलाले नाक समाती जोडले सिँसिँ गर्नु हुँदैन । यसले कानलाई खराब गर्छ ।
३. पानी जहिले पनि नाकको एउटा प्वालबाट राखेर अर्को प्वालबाट आउनुपर्दछ । नाकको प्वालबाट राखेको पानी मुख वा घाँटीमा आयो भने ध्यान दिनु कि टाउको ढल्काएको मिलेन । ठीक तरिकाले टाउको ढल्काएपछि मुख वा गलामा पानी नगई नाकको अर्को प्वालबाट बाहिर आउँछ ।
४. जलनेतिमा प्रयोग गर्ने पानी सफा र उमालेर मनतातो भएको हुनुपर्दछ । फोहर वा जस्तो पायो त्यस्तो पानीको प्रयोग कहिल्यै गर्नु हुँदैन ।
५. धेरै चिसो वा धेरै तातो पानीको प्रयोग गर्नु हुँदैन ।

## फाइदा

१. पटकपटक भइरहने रुघाको समस्या र नाक बन्द हुने, गन्ध थाहा नपाउने एवं पिनासमा यो विधि एक्लै पनि अत्यन्त सफल उपचार हो ।
२. आँखाको विशेष रोगका कारण नभई सामान्यत: देख्ने क्षमतामा कमी हुँदै गइरहेका अवस्थामा यसले अत्यन्त फाइदा गर्दछ । चस्माबिना नचल्नेहरूले जलनेतिको नियमित एक्लो प्रयोगले चस्मा छाडेका धेरै उदाहरण छन् ।
३. गलतुण्डीका शोथमा पनि यो लाभदायक छ । समग्रमा भन्नुपर्दा नाक, कान, घाँटी, आँखा र टाउकोका विभिन्न समस्यामा यसले फाइदा गर्दछ ।
४. मिर्गी, हिस्टेरिया, उन्माद, विक्षेप र पागलपनमा लाभदायक छ ।
५. आधा वा पूरै टाउको दुख्ने, अनियन्त्रित क्रोध र अनिद्रामा फाइदा गर्दछ ।
६. शरीर र मस्तिष्कको आलस्यलाई हटाई स्फूर्ति दिन्छ ।
७. खोकी, दम र श्वास प्रश्वास प्रणालीको एलर्जीमा फाइदा गर्दछ ।
८. असमयमा रौँ खस्ने, फुल्नेजस्ता समस्याहरूमा फाइदा गर्छ ।
९. हाम्रोजस्तो धूलो, धुँवाले प्रदूषित स्थानमा जलनेति नियमित गर्नाले यसबाट हुने घातक कुप्रभावबाट बच्न सकिन्छ ।
१०. योग साधकहरूलाई आज्ञाचक्र जागरणमा सहायता गर्दछ ।

## सिद्धाश्रम शक्ति केन्द्रका सम्पर्क कार्यालयहरु

- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी, फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट, फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल, फोन: ०४६-५४००११
- **पाल्पा**, तानसेन, फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल, फोन:२२२००२१
- **गोरखा**, बसपार्क, फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा, फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**, कटुन्जे-१, फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक, फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा फोन: ९८४४०४०८९९
- **स्याङ्जा**, स्याङ्जाबजार फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी
- **काठमाडौँ**, पुरानोबानेश्वर, फोन: ०१-२१०११२६
- **काठमाडौँ**, सिमलटार
- **काठमाडौँ**, तीनकुने (मुनि भैरव)
- **ललितपुर**, गोदावरी

# नाथ सम्प्रदायमा कुण्डल धारण

यस सम्प्रदायको दीक्षा विशेष गरी वर्षमा एकपटक वसन्तपञ्चमीका दिन दिइन्छ । दीक्षा लिनेलाई सर्वप्रथम आफ्नो कान चिर्न लगाएर त्यसमा कुण्डल धारण गर्न लगाइन्छ । यही कुण्डल नै नाथ सम्प्रदायको प्रमुख चिह्न हो । कान चिर्नु नाथ सम्प्रदायमा प्रवेशका लागि पहिलो सिँढी हो । यस कार्यलाई कुनै शुभ अवसरका दिन पनि सम्पन्न गर्ने गरिन्छ । कान चिर्ने बेला आफूनजिक रजस्वला भएकी स्त्री नआऊन् भन्नेमा नाथयोगीहरू निकै सतर्क हुन्छन् ।

श्री श्री महायोगी गुरु गोखनाथले नाथपन्थका योगीहरूलाई अन्य पन्थभन्दा पृथक् राख्न कान चिरेर कुण्डल धारण गर्ने प्रथा चलाउनुभएको हो । श्री श्री महायोगी गुरु गोरखनाथले सर्वप्रथम भर्तृहरिको कानमा माटोको कुण्डल धारण गराउनुभएको थियो ।

तामिलनाडुको उत्तरी जिल्लामा परशुरामेश्वरको नामले परिचित प्राचीन मन्दिर छ जुन मन्दिरमा रहेको भगवान् शिवको मूर्तिमा पनि ठीक त्यस्तै प्रकारको कुण्डल देख्न सकिन्छ जुन कुण्डल नाथयोगीहरूले धारण गर्दछन् । एलोरा, एलिफेन्टाका गुफाहरूमा भगवान् शिवका यस्ता अनेक मूर्तिहरू पाइन्छन् जसमा भगवान् शिवले नाथयोगीहरूले जस्तै कुण्डल धारण गर्नुभएको देख्न सकिन्छ । यी मूर्तिहरू आठौँ शताब्दीतिरका मानिन्छन् । यसैको आधारमा पनि नाथयोगीहरूको कुण्डल धारण गर्ने प्रचलन निकै पुरानो मान्न सकिन्छ । तर श्री श्री महायोगी गुरु गोरखनाथले आफ्नो समयमा नाथयोगीहरूका लागि कुण्डल धारण साधनाका लागि अनिवार्य अङ्ग बनाइदिनुभएको थियो । यो प्रथा आज पनि विद्यमान छ ।

नाथपन्थका जो योगी कान चिरेर कुण्डल धारण गर्दैनन्, तिनलाई 'अघोरी' भन्ने चलन छ । स्मरणीय छ, प्रत्येक नाथयोगी कान चिर्नुअघि अघोरी नै कहलाइन्छन् र कान चिराएपछि यिनै अघोरी कानफट्टा वा कानचिरुवा कहलाइन्छन् । गुरु मत्स्येन्द्रनाथ तथा श्री श्री महायोगी गुरु गोरखनाथ कानचिरुवा योगी हुनुहुन्थ्यो । तर गुरु जालन्धरनाथले कहिल्यै कान चिराउनुभएन र आजीवन अघोरी हुनुभयो । आज जति पनि अघोरी

पाइन्छन्, उनीहरू गुरु मत्स्येन्द्रनाथ, श्री श्री महायोगी गुरु गोरखनाथ र गुरु जान्धरनाथलाई आफ्ना गुरु मान्छन् र उनीहरूको विश्वास छ कि यी तीनै गुरुहरू अमर हुनुहुन्छ, सधैं विचरण गरिरहनुहुन्छ र कष्टमा तुरुन्त सहायताका लागि उपस्थित हुनुहुन्छ ।

कुण्डल धारण नाथयोगीहरूको पहिचान पनि हो । यही पहिचानको माध्यमले गर्दा पनि कानफट्टा योगीहरूको समाजमा आफ्नै किसिमको विशिष्ट स्थान रहेको पाइन्छ । कुण्डल धारणका लागि विभिन्न नियमहरूको पालनापछि मात्रै व्यक्ति कान चिर्ने अधिकारी बन्दछ । सामान्यतया कुनै कान चिरेका अर्थात् कानफट्टा योगीहरूले नै आफ्नो शिष्य बनाएर अरू व्यक्तिलाई कान चिर्ने गरेको पाइन्छ । यसरी कान चिर्न इच्छुक व्यक्तिहरू जब यस्ता कानफट्टा योगीहरूको संसर्गमा पुग्छन् तब सम्बन्धित गुरुले आवश्यक परीक्षा लिई योग्य ठहऱ्याएमा कान चिर्ने गरिन्छ । सामान्यतया चालीस दिनदेखि तीन वा छ महिनासम्म आफ्नो रेखदेखमा राखेर जाँच गरेपछि मात्र गुरुले विचार गरी परीक्षा लिई योग्य ठहऱ्याएमा कान चिर्ने गरिन्छ । यी नियमहरू कति हदसम्म पालना भइरहेका छन् भन्ने विषय आफैँमा विवादास्पद हुन सक्छ । कानफट्टा योगीहरूको हालको परिवेशलाई अध्ययन गर्दा कान चिर्ने प्रथा मन्दिरको पूजाआजा चलाउने कानचिरुवा जोगीहरूको माग पूरा गर्ने माध्यम बनेको पाइन्छ । प्राय: भगवान् शिवगोरक्षका धेरैजसो मन्दिरहरू, भगवान् भैरव एवं अन्य विभिन्न नाथयोगीहरूका शक्तिपीठहरूमा कानफट्टा योगीहरू नै पूजारीका रूपमा बस्ने गरेको पाइन्छ । पूजारीको अभावमा पनि कैयौं परिस्थितिमा कान चिर्ने प्रथा एउटा औपचारिक प्रथाको रूपमा पनि विकसित हुँदै आइरहेको पाइन्छ ।

यसरी कान चिरिदिने गुरुले योग्य ठहऱ्याएपछि एक विशेष समारोहमा कान चिर्ने कार्य सम्पन्न गरिन्छ । कान जुनसुकै उमेरमा पनि छेड्ने गरिन्छ । तैपनि व्यक्तिको ईच्छा एवं उसका अभिभावकको सहमतिका आधारमा कान छेड्ने गरेको पाइन्छ । विशेष अवसरहरूलगायत वसन्तपञ्चमी एवं विशेष महिनाहरू पुस, माघ, फागुन, चैत्रमा पनि कान छेड्ने गरेको पाइन्छ । कान छेड्ने प्रथामा कान छेडाउने व्यक्तिले स्नानादि गरी चोखो हुने र भेटीका रूपमा एउटा नरिवल, फूल, मिठाई आदि वस्तु दिने प्रावधान पनि पाइन्छ । कान छेड्नका लागि विशेष खालको चक्कु प्रयोग गरिन्छ जसको दुवैतिर धार हुन्छ । यस्तो चक्कुले तीनपटक चिर्ने प्रावधान हुन्छ । यदि व्यक्तिले आफ्नो कानको प्वाल ठूलो बनाउन चाहेमा त्यो पनि गर्न सक्छन् । यसरी छेडेको कानमा निमको काठ राखिन्छ र पछि चक्कुलाई भुइँमा गाडिन्छ । यसरी कान छेडेपछि विशेष अवसरमा उपस्थित हुनुपर्ने प्रावधान हुन्छ । यसरी कान छेडेपछि विभिन्न किरिया खुवाउने (वाचा गराउने) प्रचलन रहेको पाइन्छ अर्थात् के गर्न हुने, के गर्न नहुने आदिका बारेमा सम्बन्धित योगीलाई जानकारी दिइन्छ । यसरी कान छेडेपछि सामान्यतया कुनै व्यापार, व्यवसायमा नलाग्ने, जागिर नखाने, आफूसँग खतरनाक हातहतियारहरू नराख्ने, नरिसाउने, काटमार नगर्ने, विवाह नगर्ने, जस्तोसुकै परिस्थितिमा पनि कानको सुरक्षा गर्ने आदि वाचा गराइन्छ । त्यसपछि मात्र उसले मन्त्र प्राप्त गरी दीक्षा प्राप्त गर्दछ । दीक्षित भइसकेपछि उसलाई पहेँलो वा रातो रङको कपडा दिइन्छ र गुरुले उसलाई शिष्यका रूपमा स्वीकार्दछन् । यसपश्चात् उक्त व्यक्तिको कपाल काटिन्छ र उक्त कपाललाई नदीमा लगेर बगाइन्छ । कहिलेकाहीँ गुरु-चेला दुवै नदीमा नजाँदासम्म झोलामा राखिन्छ र पछि अनुकूल मिलाएर बगाउने गरिन्छ ।

यसरी कान छेडिसकेपछि विभिन्न रिङ, मुद्रा राख्ने प्रचलन छ । यसरी लगाइने रिङ विभिन्न आकार र तौलका हुने गर्दछन् । शुरु-शुरुमा माटोको रिङ चलाउने चलन थियो । पछि माटोको रिङ टुटफुट हुने सम्भावना बढी भएको कारण नफुट्ने खालको रिङ, मुद्रा अथवा कुण्डलको खोजी भएको पाइन्छ । सामान्यता यसरी लगाउने रिङ दुई प्रकारका छन् ।

क) चेप्टो रिङ- गोलाकार रूपको रिङलाई चेप्टो रिङ मानिन्छ ।

यस्ता रिङ विभिन्न साइजमा पाइन्छन् । यस्तो रिङ लगाउनेलाई 'दर्शनी योगी' भन्ने गरेको पाइन्छ र यस्ता योगीहरू उच्चस्तरका मानिन्छन् । यी रिङहरूको परिधि भारतको पश्चिमतिर सात इन्चसम्मको भएको पनि पाइन्छ ।

ख) वेलनाकार (Cylindrical)– वेलनाकार रिङलाई कुण्डल मानिन्छ । यस्तो वेलनाकार रिङ लामो खालका विभिन्न आकारमा पनि प्रयोग गरेको पाइन्छ । गोलो रिङको रूपमा चिनिने रिङलाई 'कुण्डल धारण' भनी चिन्ने गरिन्छ । सामान्यतया रिङलाई पवित्री (Holy or sacred) भनिन्छ ।

माथि वर्णन गरिएका रिङहरू विभिन्न वस्तुहरूबाट निर्माण भएको पाइन्छ । गैँडाको सिङबाट बनाइएको रिङ योगीहरूको मनपर्ने र दुर्लभ रिङ मानिन्छ । त्यस्तै, विभिन्न धातुहरू एवं सुनका मुद्रा बनाई शिरमा धागोले बाँधेर पनि लगाइएको पाइन्छ । भारतका कैयौं शक्तिपीठका महन्तहरूले यसरी प्रयोग गरेको पाइन्छ । त्यसैगरी सीसा, ढुङ्गा, माटो, काँच, आदिको कुण्डल धारण गरेको पनि नापाइने होइन ।

यसरी विभिन्न नीतिनियम, अनुशासनमा बसेर अगाडि बढ्ने योगीहरू नै वास्तविकरूपमा नाथयोगीहरू हुन्छन् । कान चिर्ने प्रथा कुनै सामान्य प्रक्रिया होइन । यो त आध्यात्मिकरूपमा अगाडि बढ्नका लागि गरिने दरिलो सङ्कल्प हो । यो सङ्कल्प आफ्नो लक्ष्यमा पुग्नका लागि सामाजिकरूपमा दिइएको स्वीकृति एवं प्रत्यक्ष प्रमाण पनि हो । यसैले पनि खराब आचरण, सङ्गत, खानपान आदिबाट माथि उठेर परमार्थ प्राप्तिको दिशामा अगाडि बढ्ने माध्यम हो कान छेड्ने प्रथा ।

तर यसलाई आजको समाजका मानिसहरूले कसरी लिएका छन्, त्यो आफैँमा सोचनीय विषय हो । कानफट्टा योगीमा अर्थात् कानचिरुवा योगीहरूमा हुनुपर्ने गुणहरू, आवश्यक आधारभूत कुराको पालना कत्तिको भएको छ, यसको विश्लेषण हुनु जरुरी छ । साथै यस्ता कुराहरूप्रति कानफट्टा योगीहरूले पनि बुझ्नुपर्ने, आत्मचिन्तन गर्नुपर्ने अति अनिवार्य छ । समाजमा देखिएका धेरै कानचिरुवा जोगीहरूको अवस्था बडो दयनीय छ । उच्च किसिमको अनुशासनमा बस्न नसक्नु, आवश्यक नीतिनियमहरूलाई पूर्णरूपले आत्मसात गर्न नसक्नु, आवश्यक साधना, ध्यान, जप, तपमा अत्यन्त कमी आउनु आदिजस्ता कारणहरूले कानचिरुवा जोगीहरूले आफ्नो गरिमा, आफ्नो पहिचान एवं सामाजिक रूपको उच्च दृष्टिकोण आदिलाई गुमाएका छन् । कठिन नीतिनियममा बसेर अगाडि बढ्न नसक्नु नै सबैभन्दा ठूलो कमजोरी हो भन्दा दुईमत नहोला । नीतिनियमहरूसँग सम्झौता गर्दै अगाडि बढ्नु, नाममात्रको कान चिर्नुले खासै धेरै महत्त्व राख्दैन । तैपनि ती कान चिर्ने योगीहरू पक्कै पनि साधुवादका पात्र छन् किनकि शताब्दीऔँदेखि चलिआएको परम्परालाई जीवन्तता दिन कमसेकम कान चिरेर पहेँलो भेषभूषा (जोगी लवाइ) लगाउने हिम्मत त गरेका छन् । त्यसैले आजको आवश्यकता भनेकै हाम्रा प्राचीन परम्पराहरूलाई जीवन्तता दिने त्यस्ता व्यक्तित्वहरूको हो जसले नाथयोगीका सिद्धान्तहरूलाई पूर्णरूपले पालना गर्न सकून् ।

नाथयोगीहरूको पहिचानको एउटा माध्यमको रूपमा रहेको कान चिरी कुण्डल लगाउने प्रथाले जीवन्तता पाइरहनु नितान्त आवश्यक छ । तर कुनै योगी कान नचिरेरै पनि एक सफल, सक्षम नाथयोगी बन्न सक्दछ भन्ने सत्यतालाई पनि हामीले अङ्गीकार गर्नु अत्यावश्यक छ । कान नचिर्नेहरू नाथयोगी नै हुँदैनन् भनेर सम्झनु हाम्रो अज्ञानता हुनेछ ।

# नाथ सम्प्रदायमा भस्म धारण

नाथ सम्प्रदायका विविध भेषभूषा, चालचलन, रहस्यात्मक गतिविधिहरूलाई विस्तृतरूपमा चर्चा गर्ने कोशिश गर्दै आइरहेका छौं । यसै क्रममा नाथ सम्प्रदायमा प्रचलित भस्म धारणको विषयमा केही चर्चा गर्ने जमर्को गरेका छौँ ।

भस्म भन्नेबित्तिकै खरानी अथवा विभूति भनेर चिनिन्छ । वास्तवमा कुनै पनि प्रकारका काठ, आदि वस्तुहरूलाई जलाउँदा बाँकी रहेको खरानीलाई नै भस्म भनिन्छ । यस भस्मलाई शरीरमा लगाउने काम नै भस्म धारण हो ।

हुन त विभिन्न सम्प्रदायमा भस्म धारण गर्ने आ-आफ्नै किसिमको चलन चलिआएको छ । तैपनि नाथ सम्प्रदायमा यसको प्रचलन बढी देखिन्छ । यसो हेर्दा विभिन्न योगी, संन्यासी, बाबा, अघोरीले भस्म धारण गर्ने गर्दछन् । तर सबैले आ-आफ्नै विधि-विधानअनुसार भस्म धारण गर्ने गर्दछन् । कसैले निधारमा, घाँटीमा, हातमा, खुट्टामा, पेटमा, छातीमा, कुनै विशेष ठाउँमा मात्र भस्म लगाउने गर्छन् भने कसैले सम्पूर्ण शरीरभरि नै भस्म धारण गरेको देखिन्छ । विशेष गरेर नाथ सम्प्रदायमा सम्पूर्ण शरीरभरि भस्म धारण गर्ने चलन बढी रहेको पाइन्छ । नाथ सम्प्रदायका योगीहरू यसलाई भस्म स्नान भन्ने गर्दछन् । सबैभन्दा पहिले भस्म धारणको चलन भगवान् शङ्कर बाट शुरु भएको मानिन्छ । भनिन्छ, गुरु मत्स्येन्द्रनाथले घोर तपस्या गर्नुभएपछि जब शङ्कर भगवान् प्रकट हुनुभयो र वरदान माग्नको लागि मत्स्येन्द्रनाथलाई भन्नुभयो, त्यसबेला मत्स्येन्द्रनाथले भगवान्सँग आफ्नो स्वरूपको दान गर्नको लागि भन्नुभयो । तब शङ्कर भगवान्ले सबभन्दा पहिला उहाँको निधारमा भस्म लगाइदिनुभयो, तत्पश्चात् उहाँको सम्पूर्ण शरीरलाई भस्म स्नान गराउनुभयो, अर्थात् सम्पूर्ण शरीरमा भस्म घसिदिनुभयो । यसप्रकारले मत्स्येन्द्रनाथलाई आफ्नो स्वरूपको दान गरिसकेपछि शिवजीले भन्नुभयो, "हे मत्स्येन्द्र ! यस भस्म स्नानको तात्पर्य यो हो कि योगीले मान, अपमानको विचार नगरी स्वयंलाई पृथ्वीसमान जड सम्झिनुपर्छ । जसरी अग्निको संयोगबाट काठ जल्छ, त्यसैगरी योगीले त्यस ज्ञानाग्निद्वारा कठोरता आदि दुर्गुणहरूलाई जलाएर नष्ट गरिदिनुपर्छ तथा आफ्ना सबै कर्महरूलाई ज्ञानाग्निमा भस्म गरिरहनुपर्छ ।

**श्रीकरं च पवित्रं च शोकरोगनिवारणम् !**

**लोके वशीकरं प्रोक्तं भस्मं त्रैलोक्यपावनम् ॥**

यसरी भगवान् महादेवले मत्स्येन्द्रनाथलाई भस्म धारण गराई यसको महत्त्व बताउनुभएको प्रसङ्ग पाइन्छ । यसरी मत्स्येन्द्रनाथलाई भस्म धारण गराइसकेपछि भगवान् शङ्करले मत्स्येन्द्रनाथलाई भन्नुभयो– "पृथ्वीसमान सदैव धैर्यवान् र सहनशील हुनू । सदैव र म्रो, नराम्रो, जस्तोसुकै व्यवहार गरे पनि अडिग रहनू । पृथ्वीजस्तै गरी सारा मानिसहरूले पीडा दिँदा पनि, अत्याचार गर्दा पनि कहिल्यै दु:खी नभई सदा एकरस बनिरहनू । जसरी पृथ्वी जडसमान हुनुहुन्छ, त्यसरी नै जड बन्नू । चेतना केवल आत्मोन्नतिको लागि अर्थात् आत्मोद्धारको लागि सम्झनू । जसरी काठलाई भस्म गराएपछि आफ्ना सम्पूर्ण गुणहरू काठले नष्ट गर्दछ, त्यसरी नै भस्म धारणपश्चात् आफ्ना पूर्व संस्कारहरूको स्मरण गर्न हुँदैन र सांसारिक प्रपञ्चबाट टाढा नि:स्पृह भावबाट संसारमा विचरण गर्नुपर्दछ ।"

नाथ योगीहरू भस्म धारण गर्नुलाई नाथ पन्थका प्रतिपादक श्री श्री महायोगी गुरु गोरखनाथले चलाउनुभएको परम्पराअनुरूप आध्यात्मिकरूपमा अगाडि बढने प्रयोगात्मक विधिको रूपमा लिन्छन् । कतिपय योगी, संन्यासीहरू आध्यात्मिक उच्चताको लागि आत्मभाव अत्यन्त आवश्यक हुने र त्यसको लागि शरीरको सीमित परिधिबाट माथि उठ्न शरीरभरि भस्म लगाएर शरीरभावबाट आत्मभावमा रूपान्तरण भई आत्मिक शक्ति आर्जन गर्न सक्ने कुरामा विश्वास गर्दछन् ।

नाथ योगीहरूमा विशेषरूपमा प्रचलित रहेको भस्म धारणको बारेमा स्वास्थ्य विज्ञानमा पनि फाइदाजनक भएको कुरा उल्लेख पाइन्छ । भस्म धारण अथवा भस्म लेपनको वैज्ञानिकरूपमा पनि आफ्नै किसिमको विशेष महत्त्व रहेको पाइन्छ भने आध्यात्मिक रूपमा त झन् यसको महत्त्व चर्चाभन्दा धेरै पर रहेको छ । बिना भस्म धारणको त कुनै पनि योगीको कल्पना पनि गर्न सकिँदैन । जुनसुकै रूपमा भए पनि, जुनसुकै तरीकाले भए पनि भस्म धारणले विभिन्न संघ सम्प्रदायमा आ-आफ्नै किसिमको विशिष्ट महत्त्व राखेको पाइन्छ । यसरी हेर्दा भस्म धारण योगीहरूको, साधक साधिकाहरूको पहिचान हो, गर्व हो ।

भस्म धारणलाई गृहस्थ एवं संन्यासी सबैले आ-आफ्नै प्रकारले प्रयोग गरेको पाइन्छ । धार्मिक आस्थाको एक सशक्त कडी बनेको छ भस्म धारण । आजभोलि धर्ममा आस्था राख्ने धेरै श्रद्धालु भक्तजनले समेत निधारमा भस्म अर्थात विभूति धारण गरेर हिँडेको पाइन्छ । भस्म धारण गृहस्थहरूले सुरक्षाको कवच, गुरु कृपा, बाबाको कृपा, भगवान्‌को आशीर्वादको माध्यमको रूपमा अङ्गीकार गरेको पाइन्छ । यसरी सामान्यरूपमा हेर्दा पनि भस्म धारण सबैले आ-आफ्नै रूपमा आ-आफ्नै कारणको लागि गरेको पाइन्छ ।

नाथ योगीहरूमा भस्म धारण शिष्य बनाउने प्रक्रियाको रूपमा प्रचलित रहेको पाइन्छ । कुनै नयाँ शिष्य बनाउँदा पनि भस्मले स्नान

मा भस्म लेपन गरिन्छ ।

यसरी दीक्षित भएका शिष्यहरूलाई आडबन्ध लगौँटी लगाई एउटा हातमा खप्पर, एउटा हातमा चिम्टा र त्रिशूल अथवा डमरु छेउमा झोला-बटुवा दिई गुरुले यस्तो प्रकारले उपदेश दिनुहुन्छ जसलाई शिष्यले पूर्णरूपले पालना गर्दै अगाडि बढछन् । यस सम्बन्धमा गोरखवाणीको यस वाक्यले पनि भाव स्पष्ट गर्दछ–

**भिस्या हमारी कामधेनु बोलिये, संसार हमारी बाडी ।**
**गुरपरसादे भिस्या पाइबा अन्तकालिन होइगी भारी ॥**

यसरी दीक्षित भएका योगीहरूले कुनै रूखको मुनि वा कुनै घर या मन्दिरको नजिक धुनी जगाउँदछन् र सबै प्रकारका प्राकृतिक प्रतिकूलताहरूलाई सहँदै दृढता प्राप्ति गर्दछन् जसले गर्दा उनीहरूलाई आफ्नो लक्ष्य सिद्ध गर्न सहयोग पुग्दछ । यसरी योगीहरू रात्रिको चौथो प्रहरमा स्नान गरी भस्म धारण गरी उन्मनि ध्यानमा बस्दछन् र

यस अवधिमा विभिन्न गायत्री मन्त्र जस्तै अजपा गायत्री, द्वादश काल गायत्री, गणेश गायत्री, जल गायत्री, शिव गायत्री, त्रिकाल गायत्री, आदि मन्त्रहरू क्रमश: जप्दछन् । तर पनि भस्म गायत्री सर्वप्रमुख हुन्छ जसलाई पाशुपत व्रतधारी योगीलाई पहिले नै कण्ठस्थ गराइन्छ । जल स्नानपश्चात् भस्म धारण गर्दै भस्म गायत्री पाठ गर्दछन् । विभिन्न गुरुअनुसार भस्म गायत्रीका केही शब्दहरू तलमाथि भएको पाइन्छ ।

सामान्यतया सुकेको गोबरलाई जम्मा गरिन्छ, धुनी जगाइन्छ र छानेर राम्रो भभूत निकालिन्छ अनि सर्वाङ्गमा लगाइन्छ । साथै यसैबाट त्रिपुण्ड्र पनि लगाइन्छ । वास्तवमा योगीहरूले भस्म लेपन गरी मुद्रा, सेली, शृङ्गी धारण गरी आसनमा स्थित हुनुपर्दछ । यस्तो गर्ने योगीहरूमा स्वत: नै सौम्यता, शान्ति, मोहकता एवं आकर्षण प्रस्फुटित हुन्छन् । अन्य व्यक्तिहरू उनीहरूको अगाडि नतमस्तक हुन्छन् । यथार्थमा यस्ता योगीहरू शिवरूपमा प्रतिष्ठित हुन्छन् । नाथ सम्प्रदायमा यस्ता योगीहरूलाई शिवयोगी भनिन्छ । भस्म धारणको महत्त्वको बारेमा, यसको वास्तविक रहस्यको बारेमा धेरै खोज अनुसन्धान गर्न बाँकी नै छ । तैपनि आजका वैज्ञानिकहरूले खरानीमा भएको रोगसँग लड्न सक्ने क्षमता (एन्टिवायोटिक इनर्जी) भएको जसबाट कैयौँ रोगहरूको उपचार पनि सम्भव भएको पत्ता लगाएका छन् । शरीरमा भस्म धारणले जाडो र गर्मीबाट बच्न सकिन्छ जसको उदाहरण कैयौं योगीहरू नाङ्गै भस्म लेपन गरेर हिँडेकोबाट पनि प्रमाणित हुन्छ । जे होस्, भस्म धारणका वैज्ञानिक एवं आध्यात्मिक पक्षहरू प्रशस्त छन् । यसको बारेमा विस्तृत खोज अनुसन्धानबिना सम्पूर्ण कुरालाई समेट्न खोज्नु मूर्खता हुनेछ । जय गुरुदेव !

## २०६८ जेठ महिनामा पर्ने चाडपर्वहरू

| | |
|---|---|
| जेठ २ गते | श्री शिव गोरक्ष हवन |
| जेठ ३ गते | गोरक्ष प्रकट दिवस, बुद्ध जयन्ती |
| | आठौँ रोट महोत्सव शुभारम्भ |
| | तान्त्रोक्त वटुक भैरव हवन |
| | तान्त्रोक्त गणपति हवन |
| जेठ ४ गते | तान्त्रोक्त महालक्ष्मी हवन |
| | तान्त्रोक्त विन्ध्यवासिनी हवन |
| जेठ ५ गते | तान्त्रोक्त वगलामुखी हवन |
| | तान्त्रोक्त महर्षि वेदव्यास हवन |
| जेठ ७ गते | दिव्य गुरु महोत्सव |
| जेठ ११ गते | गोरखकाली पूजा |
| जेठ १३ गते | रोट महोत्सव समापन |
| जेठ १४ गते | अपरा एकादशी |
| जेठ १७ गते | सिथीचह्रे पूजा |
| जेठ २६ गते | गोरखकाली पूजा |
| जेठ २८ गते | गंगा दशहरा |
| जेठ २९ गते | निर्जला एकादशी, तुलसी बीजारोपण |

**प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजे-गुरू पूजन**
**प्रत्येक दिन साँझ ५:०० बजे-आरती**

## हार्दिक श्रद्धाञ्जलि

जन्म २०१८/३/८ — स्वर्गारोहण २०६७/१२/२७

स्व. शंकरप्रसाद सापकोटा

**शंखु, काभ्रेमा गुरुकार्य गर्ने सक्रिय कार्यकर्ता शंकरप्रसाद सापकोटाको असामयिक निधन भएकोमा दु:ख व्यक्त गर्दै शोक सन्तप्त परिवारजनमा समवेदना प्रकट गर्दछौँ । उहाँको चीर शान्तिका लागि सद्गुरुदेवहरुसँग प्रार्थना गर्दछौँ ।**

**- सिद्धाश्रम शक्ति केन्द्र**
बसुन्धरा, काठमाडौं

## हार्दिक श्रद्धाञ्जलि

जन्म २०४९/५/११ — स्वर्गारोहण २०६८/१/२

स्व. कृष्णदेवी राजथला

**बोडे, भक्तपुरमा गुरुकार्य गर्ने सक्रिय कार्यकर्ता कृष्णदेवी राजथलाको असामयिक निधन भएकोमा दु:ख व्यक्त गर्दै शोक सन्तप्त परिवारजनमा समवेदना प्रकट गर्दछौँ । उहाँको चीर शान्तिका लागि सद्गुरुदेवहरुसँग प्रार्थना गर्दछौँ ।**

**- सिद्धाश्रम शक्ति केन्द्र**
बसुन्धरा, काठमाडौं

# आफ्नो हात आफै हेरौँ

***यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार हस्तरेखासम्बन्धी जानकारीहरु पाठकवर्गसमक्ष राख्दै आइरहेका छौँ । आशा छ, यसबाट यहाँहरु लाभान्वित हुनुहुनेछ ।***

## विवाहरेखा

हाम्रो शरीरमा सबैभन्दा कमलो र विचित्र जुन अवयव छ, त्यसको नाउ हृदय हो । एक प्रकारले भन्ने हो भने शरीरमा यसको सबैभन्दा बढी महत्त्व छ । एकातिर यसले सम्पूर्ण शरीरमा रगत पुऱ्याउने कार्य गर्दछ भने अर्कोतिर यो आफैँमा यति कमलो हुन्छ कि कैयौँ भावनाहरूलाई मनमा सजाएर राख्दछ । कमलो विचार, विपरीत योनिप्रतिको भावनादि यसैबाट सम्पन्न हुन्छ । यो यति धेरै कमलो हुन्छ कि अलिकतिमात्रै पनि विपरीत घातबाट यसलाई ठेस पुऱ्याउने हो भने यो टुट्न जान्छ । मानवीय कल्पनाहरूको यो एउटा सुन्दर प्रतीक हो । करुणा, दया, ममता, स्नेह र प्रेम आदि भावनाहरू यसैको माध्यमबाट संचालित हुन्छन् ।

एउटा हृदयले अर्को हृदयसित सम्पर्क स्थापित गर्न चाहन्छ । आपसमा दुवैको प्रेम रहोस्, दुवै हृदय एक मधुर कल्पनाले ओतप्रोत होस् । जब दुवै हृदय एउटा सूत्रमा बाँधिन जान्छ तब समाजले त्यसलाई विवाहको नाम दिन्छ ।

वस्तुत: मानवजीवनको पूर्णता तबमात्र मानिन्छ जबकि उसको अर्द्धांग पनि सुन्दर होऊन्, समझदार होऊन्, प्रेमको भावनाले भरिएको होऊन् तथा दुवै हृदय एकापसमा मिल्ने क्षमताले युक्त होस् । जसको घरमा सुशील, सुन्दर, स्वस्थ र शिक्षित पत्नी हुन्छिन्, त्यो घर निश्चय नै इन्द्रको भवनभन्दा धेरै सुखकर मानिन्छ । यसैले हस्तरेखा विशेषज्ञले जीवनरेखालाई जति महत्त्व दिन्छ, उत्तिकै महत्त्व विवाह रेखालाई पनि देऊन् किनकि यस रेखाको माध्यमबाट मात्रै मानवजीवनको पूर्णताको ज्ञान हुन सक्छ ।

मानवजीवनको यात्रालाई राम्रोसित पार गर्नका लागि एक यस्तो सहयोगीको आवश्यकता हुन्छ जो दु:खमा सहायक होऊन्, तनावहरूमा हिम्मत बढाउने होऊन् तथा जीवनमा काँधमा काँध मिलाएर हिँड्ने क्षमता राख्ने होऊन् ।

हत्केलामा विवाहरेखा वा वासनारेखा अथवा प्रणयरेखा हेर्दा त सानो हुन्छ तर यसको महत्त्व सबैभन्दा बढी हुन्छ । यो रेखा कान्छी औँलाको तल, हृदयरेखाको माथि, बुध पर्वतको छेउमा हत्केला बाहिर निस्कने बेलामा जुन रेखाहरू देखिन्छन्, ती रेखाहरू नै विवाह रेखा हुन् ।

हत्केलामा यस्ता रेखाहरू दुई-तीन वा चार हुन सक्छन् । तर ती सबै रेखाहरूमा एउटा रेखा प्रमुख हुन्छ । यदि यी रेखाहरू हृदयरेखाभन्दा माथि छ भने विवाहरेखा मानिन्छ र यस्तो व्यक्तिको विवाह निश्चय नै हुन्छ । यदि हत्केलामा दुई वा तीन विवाह रेखाहरू छन् भने जुन रेखा सबैभन्दा बढी लामो, पुष्ट र स्वस्थ छ त्यसैलाई नै विवाहरेखा मान्नुपर्दछ । बाँकी रेखाहरू भने यस कुराको सूचक मानिन्छ कि या त विवाहपूर्व सम्बन्ध रहेर छुट्छ अथवा विवाहपछि त्यति नै सङ्ख्यामा स्त्रीहरूसित सम्पर्क रहन्छ ।

तर यसका अतिरिक्त जुन साना रेखाहरू हुन्छन्, ती रेखाहरू प्रणयरेखाहरू कहलाइन्छन् । जतिवटा रेखा हुन्छन् त्यति नै परस्त्रीहरूसित सम्पर्क रहन्छ । यही कुरा स्त्रीहरूका सम्बन्धमा पनि लागू हुन्छ ।

तर केवल यी रेखाहरूलाई हेरेर मात्रै यस्तो मत स्थिर गर्न भने मिल्दैन । पर्वतहरूको अध्ययन पनि यसको साथमा हुनु आवश्यक हुन्छ । यदि यस प्रकारका रेखाहरू छन् र गुरु पर्वत धेरै पुष्ट छ भने निश्चय नै यस्तो व्यक्तिले प्रेम सम्बन्ध स्थापित गर्दछ, तर उसको प्रेम सात्त्विक र निर्दोष हुन्छ । यदि शनि पर्वत विशेष उठेको छ भने

र यस्ता रेखाहरू देखिन्छन् भने व्यक्तिले आफूभन्दा जेठी स्त्रीहरूसित प्रेम सम्बन्ध स्थापित गर्दछ । यदि हत्केलामा सूर्य पर्वत पुष्ट छ र यस्ता रेखाहरू छन् भने व्यक्तिले धेरै सोचीसम्झी मात्रै अन्य स्त्रीहरूसित प्रेम सम्बन्ध स्थापित गर्दछ । यदि बुध पर्वत विकसित छ तथा प्रणयरेखाहरू हत्केलामा देखिन्छन् भने यस्तो व्यक्तिलाई पनि प्रेमिकाहरूबाट धनलाभ हुन्छ । यदि हत्केलामा प्रणयरेखाहरू छन् र चन्द्र पर्वत विकसित छ भने व्यक्ति कामलोलुप तथा सुन्दर स्त्रीहरूको पछि लाग्ने हुन्छ । यदि शुक्र पर्वत अति नै विकसित छ तथा प्रणय रेखाहरू छन् भने त्यो व्यक्ति आफ्नो जीवनमा कैयौं स्त्रीहरूसित सम्बन्ध स्थापित गर्दछ तथा पूर्ण सफलता प्राप्त गर्दछ ।

प्रणयरेखाको हृदयरेखासित गहिरो सम्बन्ध हुन्छ । यी प्रणय रेखाहरू हृदय रेखासित जति धेरै नजिक हुन्छन्, व्यक्तिले त्यति नै कम उमेरमा प्रेमसम्बन्ध राख्दछ । हृदयरेखाबाट जति धेरै यी प्रणयरेखाहरू टाढा हुन्छन् व्यक्तिको जीवनमा प्रेम सम्बन्ध त्यति नै ढिलो हुन्छ ।

यदि हत्केलामा प्रणयरेखा छैन भने व्यक्ति आफ्नो जीवनमा संयमित रहन्छ तथा त्यो कामलोलुप हुँदैन ।

यदि प्रणयरेखा गहिरो तथा स्पष्ट छ भने त्यस व्यक्तिको प्रणय सम्बन्ध पनि गहिरो हुन्छ । तर यी रेखाहरू छोटा तथा कमजोर छन् भने त्यस व्यक्तिको प्रणय सम्बन्ध पनि धेरै कम समयसम्म मात्र चल्न सक्छ ।

यदि दुई प्रणय रेखाहरू साथसाथै अगाडि बढेको छ भने उसको एकैसाथ दुइटी स्त्रीहरूसित प्रेम सम्बन्ध चल्छ । यदि प्रणय रेखामा क्रसको चिह्न छ भने व्यक्तिको प्रेम बीचमै टुट्छ । यदि प्रणय रेखाम द्वीपको चिह्न छ भने उसले प्रेमको क्षेत्रमा बदनामी भोग्नुपर्ने हुन्छ । यदि प्रणय रेखा सूर्य पर्वततिर गएर दुई भागमा विभाजित हुन्छ भने त्यस व्यक्तिको प्रेम सम्बन्ध चाँडै टुट्छ । यदि प्रणय रेखाबाट कुनै सहायक रेखाहरू हत्केलाको तलतिर गएका देखिन्छन् भने उसले यस क्षेत्रमा बदनामी सहनुपर्ने हुन्छ । यदि प्रणय रेखाबाट कुनै सहायक रेखा हत्केलाको माथितिर बढेको छ भने उसको प्रणय सम्बन्ध टिकाउ हुन्छ तथा जीवनभरि आनन्द उपभोग गर्दछ । यदि प्रणय रेखा बीचमा टुटेको छ भने उसको प्रेम सम्बन्ध बीचैमा टुट्छ ।

विवाहरेखासम्बन्धी केही तथ्यहरू पाठकहरू सामु राखिन्छ–

१. यदि विवाहरेखा स्पष्ट, निर्दोष तथा लालिमायुक्त छ भने त्यस व्यक्तिको वैवाहिक जीवन अति नै सुखमय हुन्छ ।
२. यदि लुवै हत्केलामा विवाह रेखाहरू पुष्ट छन् भने व्यक्तिले दाम्पत्यजीवनमा पूर्णरूपमा सफलता प्राप्त गर्दछ ।
३. यदि विवाहरेखा कान्छी औँलाको दोस्रो पोरसम्म चढेको देखिन्छ भने व्यक्ति आजीवन अविवाहित रहन्छ ।
४. यदि विवाह रेखा तलतिर झुकेर हृदयरेखालाई स्पर्श गर्न लागेको छ भने पत्नीको मृत्युको संकेत भनेर बुझ्नुपर्दछ ।
५. यदि विवाहरेखा टुटेको छ भने जीवनको मध्यकालमा या त पत्नीको मृत्यु हुन्छ, या उसको वैवाहिक जीवन अति नै दुःखमय हुन्छ अथवा तलाक हुन्छ ।
६. यदि शुक्र पर्वतबाट कुनै रेखा निस्केर विवाहरेखासित सम्पर्क स्थापित गर्दछ भने उसको वैवाहिक जीवन अति नै दुःखमय हुन्छ ।
७. यदि विवाहरेखा अगाडि बढेर दुई मुखको बन्न जान्छ भने यस प्रकारको दाम्पत्यजीवन सुखमय मान्न सकिन्न तथा उसको वैवाहिक जीवन कलहपूर्ण बनिरहन्छ । क्रमश:

# तिलक हाम्रो संस्कार

हाम्रो संस्कृतिमा निधारमा तिलक लगाउने परम्परा प्राचीनकालदेखि नै प्रचलित छ । हाम्रा ऋषिमहर्षि, साधुसन्त तथा विभिन्न प्रकारका साधक तथा संस्कारवान् र गृहस्थहरूले चन्दन, केसर, कुंकुम, कस्तुरी, अष्टगन्ध, भस्म आदिका तिलक निधारमा लगाएर असीम सुख, शान्ति र मंगल अनुभूति गर्दथे । यस परम्परालाई सिद्धाश्रम शक्ति केन्द्रले संरक्षण र संवर्द्धन गरिरहेको छ । दिव्य गुरु महोत्सव, पूजन, विभिन्न हवन आदिमा आश्रमले तिलक लगाइदिने गर्दछ । धार्मिक अनुष्ठान, मांगलिक कार्य, विजयोल्लास, विदाइ समारोह तथा स्वागतसत्कार आदिमा तिलक लगाउने लोकप्रियता आज पनि सर्वत्र पाइन्छ ।

हाम्रा प्राचीन ग्रन्थहरूमा तिलकको गरिमाको विषयमा अत्यधिक गुनगान गरिएको छ । राजालाई गरिने राजतिलकले उनलाई प्रजाको प्रतिनिधित्व प्रदान गरेर कर्तव्यनिष्ठाको भान गरेको पाइन्छ । निधारमा तिलक लगाउनु हाम्रो संस्कृतिको एउटा अभिन्न अंग हो । आदिकालदेखि नै विभिन्न देवीदेवताहरूका उपासकहरूले आफ्ना परम्परा तथा रीतिअनुसार निधारमा तिलक धारण गर्दै आइरहेका छन् । प्राचीनकालमा राज्याभिषेकमा राजगुरुले विधि विधानसहित नवराजालाई राजतिलक गराउँथे । युद्धको समयमा, प्रस्थान गर्ने बेलामा पत्नीहरू आफ्ना सैनिक श्रीमान्को निधारमा विजयीश्रीको कामनाका साथ तिलक लगाइदिन्थिन् । योद्धाहरू देशका लागि लडाइँ गर्दा अति नै उत्साहका साथ मातृभूमिको माटोलाई निधारमा धारण गर्दथे ।

पूजापाठ तथा धार्मिक एवं मांगलिक अनुष्ठानहरूमा तिलक

लगाउने परम्परा त छँदैछ, रक्षाबन्धन, तिहारजस्ता पर्वमा दिदी बहिनीहरूले आफ्ना दाजुभाइहरूको नाडीमा रक्षासूत्र बाँधेर तिलक लगाइदिएर आत्मीयता प्रदान गर्दै दीर्घजीवन एवं सुख समृद्धिको कामना गर्दछन् । पारिवारीक दायित्वको निर्वाह एवं हार्दिक शुभकामनाहरूमा धेरै सहृदयता, संवेदनशीलता तथा असीम कल्याणको कामना समाएको हुन्छ । आमाले आफ्ना छोराछोरीहरूलाई र पत्नीले आफ्ना पतिदेवलाई तिलक लगाइदिएर रणक्षेत्रमा विजय प्राप्तिका लागि पठाउँदा र उनीहरू विजय भएर फर्कने बेलामा आरती उतारेर मंगल तिलक लगाइदिई स्वागत गर्दछन् । शास्त्रीय भाषामा तिलक त्यस शोभाकारी अथवा प्रतीक चिह्नलाई भनिन्छ जसलाई चन्दन, कुंकुम वा भस्म आदिद्वारा निधार तथा शरीरका अन्य भागमा लगाइन्छ । तिलक सौन्दर्यवृद्धि तथा आकर्षक देखिनका लागि लगाइन्छ ।

तपाईं पनि कहिलेकाहीं मन्दिर जाँदा पूजारीले तपाईंलाई अवश्यै तिलक लगाइदिएका होलान् । कुनै पनि धार्मिक अनुष्ठानमा जाँदा त्यहाँका पुरोहित, त्यहाँ उपस्थित सबै श्रद्धालुजन सबैलाई तिलक लगाइदिन्छन् । नवरात्रि होस् वा जन्माष्टमीको अवसर, सबै पूजा अर्चनाका बेला तिलक लगाइन्छ । रक्षा बन्धनमा दिदीबहिनीले आफ्ना दाजुभाइहरूको निधारमा तिलक लगाइदिने गर्दछन् । श्राद्ध गर्ने समयमा पनि तिलक लगाउने गरिन्छ । भन्नुको अर्थ हो कि जीवनमा कैयौं यस्ता अवसरहरू आउँछन् जुनबेला व्यक्तिले प्रसन्न भएर तिलक लगाउँछन् । जसलाई तिलक लगाइदिएका हुन्छन् त्यस व्यक्तिप्रति तिलक लगाइदिनेको मंगलभावना रहन्छ र तिलकका साथ उसलाई आशीर्वाद प्राप्त हुन्छ ।

तिलकको महत्त्व धेरै धार्मिक ग्रन्थहरूमा बताइएको पाइन्छ । ब्रह्मवैवर्त पुराणअनुसार–

**स्नानं दानं तपो होमो देवतापितृ कृर्म्म च ।**
**तत्सर्व निष्फलं यानि ललाटे तिलक बिना ।**
**ब्राह्मण स्तिल्कं कृत्वा कुर्य्यासंध्याञ्च तर्पणम् ।**

अर्थात्, तिलकबिना स्नान, होम, तप, देवकार्य आदि सबै कृत्य निष्फल हुन जान्छन् । ब्राह्मणले तिलक धारण गरेपछि मात्र तर्पण

आदिको कार्य गरुन् ।

प्रतिदिन स्नान गरेपछि तिलक धारण गर्नु सबै वर्णको कर्तव्य हो। नित्य, नैमित्तिक, काम्य यी सबै तीन प्रकारका कर्म तथा पितृहरूको श्राद्ध तिलक धारणबिना निष्फल हुन जान्छन् । शास्त्रमा भनिएको छ– बिना तिलक र कुश स्नान, संन्ध्या, पञ्चयज्ञ, यज्ञ-हवन तथा श्राद्ध आदि समस्त कर्म निष्फल हुन जान्छन् ।

'पद्मपुराणमा भनिएको छ– जो अशुचि र अनाचार छ तथा जसको मनमा सदा कुविचार भरिएको हुन्छ, त्यस मनुष्य पनि त्रिपुण्ड्रक तिलक धारण गरेर समस्त पापबाट मुक्त हुन जान्छ । ऊर्ध्वपुण्ड्रक तिलक धारण गर्ने मनुष्यको चाहे जुनसुकै स्थानमा मृत्यु भए पनि, मृत्यपछि उसले चाण्डालको रूपमा जन्म लिए पनि ऊ स्वर्गलोक जान्छ ।

**तिलक सामग्री** :

तिलक लगाउनका लागि आदिकालदेखि नै अनेकौं प्रकारका सामग्री प्रयुक्त गरिएको पाइन्छ। सिन्दूर, मह, यज्ञ तथा हवनकुण्डको भस्म, गोबर, गाईको चरणको धूलो वा माटो (गोपद मृत्तिका), घिउ, दही, गोरोचन, कस्तूरी जल तथा माटो, गोपीचन्दन, यज्ञकाष्ठ, बेल, पीपल तथा तुलसीको विरुवाको जरा नजिकको माटो, महानिम्ब (बकाइनोको रूख), तुलसी काष्ठ, फल्गु (अंजीर), गन्धकाष्ठ (अगुरु), सेतो चन्दन, रातो चन्दन, धात्रीमूल (अमला), कुंकुम, बेसार, कालो बेसार तथा अष्टगन्ध आदि । पूजाअर्चना र सन्ध्यादि कार्यमा उक्त सामग्रीको तिलक लगाइन्छ ।

वैष्णवधर्मका अनुयायी गोपीचन्दन, सेतो चन्दन तथा पावन तीर्थको माटो तथा जलले अनेक आकृति बनाएर तिलक लगाउँथे । उनीहरूको तिलक सामग्रीमा द्वारिकापुरीको गोपीचन्दन नै सर्वाधिक महत्त्वपूर्ण देखिन्छ । अष्टगन्ध देवीहरूको तिलकका लागि प्रयुक्त गरिन्छ ।

भगवान् शिवका उपासक शैव तथा देवीहरू (शक्ति) का उपासक शाक्तहरूका लागि भस्म नै तिलकको मुख्य साधन हो । देवीहरूलाई कुंकुम तथा रक्त चन्दनको तथा पितृहरूलाई सेतो चन्दनको तिलक लगाइदिने परम्परा छ। सूर्य, हनुमान तथा शक्तिका प्रतीक देवी काली, तारा र दुर्गा आदिलाई रक्त चन्दनको तिलक लगाइदिने गरिन्छ ।

**तिलक धारण गर्ने विधि** :

तिलक धारण गर्ने पनि केही विशेष विधिहरू धर्ममा बताइएका छन् जुन यसप्रकार छन्– देवीदेवताहरूलाई साहिँली औंलाले, स्वयंलाई माझी औंलाले र पितृगणलाई चोरी औंलाले तथा ब्राह्मण आदि श्रेष्ठ व्यक्तिलाई बूढीऔंलाले तिलक लगाइदिने चलन छ ।

**तिलकका प्रकार** :

ऊर्ध्वपुण्ड्र : श्रीविष्णुका उपासक अर्थात् वैष्णव धर्मावलम्बी आफ्नो निधारमा ऊर्ध्वपुण्ड्रक धारण गर्दछन्। यसमा निधार (ललाट) मा दुवै आँखीभौंको बीचबाट जहाँबाट नासिका आरम्भ हुन्छ त्यस स्थानबाट माथिको दिशामा शिरको कपाल (रौं) सम्म सीधा

रेखा तिलक लगाइन्छ । वैष्णवधर्ममा यस तिलकको ठूलो महत्ता बताइएको छ । वैष्णव धर्मावलम्बीहरूका विभिन्न सम्प्रदायहरूमा यस ऊर्ध्वपुण्ड्रक तिलकका विविधता देख्न सकिन्छ ।

त्रिपुण्ड्रक– शैवसम्प्रदायको धार्मिक चिह्न हो यो। यो सांकेतिक तिलक शाक्त (देवीका उपासक) द्वारा पनि व्यवहारमा ल्याइन्छ । यो शिव एवं शक्तिको एकत्वको निर्देश चिह्न हो । त्रिपुण्ड्रक दुवै आँखीभौंको समानान्तर निधारमा एक छेउबाट अर्को छेउ भस्मको तीन रेखाले अंकित गरिन्छ। त्रिपुण्ड्रकको चिह्न छाती, भुजा तथा शरीरका अन्य अंगहरूमा पनि अंकित गरिन्छ ।

**कसरी तिलक लाउनु राम्रो हुन्छ ?**

तिलक लगाउने नियम छ । तिलक सदैव बसेर नै लगाउनु पर्दछ। निधारको दाहिने भागमा श्री ब्रह्माजी, वामपार्श्वमा भगवान् शिवजी तथा मध्य भागमा भगवान् कृष्ण निवास गर्नुहुन्छ। यसैले बीचको स्थान रिक्त राख्नुपर्दछ जसबाट निधारमा श्री विष्णुको निवास बनिरहन पाइयोस्। आराध्य देवीदेवतालाई चढाएर बचेका तिलकबाट नै चन्दन लगाउनुपर्दछ । साधक र भक्तहरूले आफ्ना लागि मात्रै चन्दन पिस्नु हुँदैन ।

**कस्तो तिलक सही हुँदैन ?**

शास्त्रानुसार गोल, टेढोमेढो, छिद्ररहित, छोटो, लामो र फैलिएको यी छ प्रकारको तिलक अमान्य छ । अत: यस प्रकारको निरर्थक तिलक लगाउनाले उपासकलाई कुनै पनि फाइदा हुँदैन ।

ऊर्ध्वपुण्ड्रकको मध्यमा छिद्र (रिक्त स्थान) बनाइन्न भने त्यो पनि धर्मविरुद्ध हुन्छ। कसैले शरीरमा शंख, चक्र, पद्म तथा अन्य प्रकारका चिह्न लगाउन धातुको सामग्रीलाई उपयोग गर्छन् जसलाई तातो गरेर लगाउने गरिन्छ र यस्ता चिह्नहरू प्राय: स्थायी हुन्छन्। तर यस प्रकारको चिह्न शास्त्रमा धर्मविरुद्ध बताइएको पाइन्छ । यस्तो कृत्य गर्ने पाताललोकका वासी हुन्छन् ।

हामी सबैले तिलकको महत्त्वलाई बुझेर नित्य तिलक धारण गर्ने गरौं । जय गुरुदेव !

# तुलसी

**तुलसस्यां सकल देवाः वसन्ति सततं यतः ।**
**अतस्तामचयेल्लोकः सर्वान्देवानसमर्चयन ।।**

अर्थात्, तुलसीमा समस्त देवताहरूको निवास सदैव रहन्छ । यसैले जसले तुलसीको पूजा गर्छ, उसलाई अनायास नै सबै देवताको पूजाको लाभ प्राप्त हुन्छ ।

तुलसी हामी सबैले देखेको चिनेको वनस्पति हो । यसलाई हिन्दु समाजमा भगवान्‌को रूपमा श्रद्धाभक्तिले पूजा गरिन्छ । नेपालका प्राय: सबै घर, मठ, मन्दिरमा यसलाई रोप्ने प्रचलन छ । जेष्ठशुक्लमा पर्ने निर्जला एकादशीका दिन यसको बिज छरिन्छ । अषाढशुक्लमा पर्ने हरिशयनी एकादशीमा उम्रेका बिरुवालाई निश्चित स्थानमा सार्ने गरिन्छ । कार्तिकशुक्लमा पर्ने हरिबोधिनी एकादशीमा विधिपूर्वक तुलसीको विवाह गरिन्छ ।

रङको हिसाबले तुलसी सेतो र कालो दुई प्रकारका हुन्छन् । यसको मूल हाँगाबाट थुप्रै शाखाहरू निस्केका हुन्छन् । यसको पात झुस भएको र सुगन्धित हुन्छ । पातहरू दुई इन्चसम्म लामा हुन्छन् । तुलसीको पात मात्रै नभएर सम्पूर्ण बोट नै सुगन्धित हुन्छ । यसको हाँगाको टुप्पामा प्याजी वा वैजनी रङका ससाना फूलहरू फुल्छन् ।

संस्कृत भाषामा यो वृन्दा, वैष्णवी, पवित्रा, पापघ्नी, कृष्णवल्लभा, पावनी, माधवी आदि थुप्रै नामले चिनिन्छ ।

धार्मिक दृष्टिले तुलसीको जति महत्त्व छ, औषधिको रूपमा पनि उत्तिकै महत्त्व छ । योग, प्राकृतिक चिकित्सा, आयुर्वेदजस्ता पुराना र वैज्ञानिक स्वास्थ्यविज्ञानले तुलसीलाई ठूलो औषधिको रूपमा प्रयोग गर्दै आइरहेको छ ।

तुलसीको पात, फूल र डाँठ सबै औषधिको रूपमा प्रयोग गर्न सकिन्छ तर पनि पात बढी मात्रामा प्रयोग गरिन्छ । यसको रसले सबै प्रकारका ज्वरोलाई फाइदा पुर्‍याउँछ । मलेरियाको ज्वरोलाई त यसको रसले ठूलो फाइदा गर्छ ।

एक चम्चा तुलसीको पातको रसमा एक चम्चा मह र दस थोपा अदुवाको रस मिलाएर दिनमा दुई-तीनपटक चाट्नाले रुघा, खोकी र दमलाई फाइदा पुर्‍याउँछ । तुलसीको रस मुटुको लागि पनि विशेष लाभदायक छ । वायु र कफ बढेर हुने समस्याका लागि तुलसी अत्यन्तै लाभकारी हुन्छ । तुलसीको पात सफा गरेर त्यसै चपाउँदा पनि उल्टी भएको र बाडुली लागेको रोकिन्छ । पिसाब पोल्ने र सफासँग पिसाब नहुनेलाई आधा चम्चा जति तुलसीको बीज पिसेर पानीसँग खान दिनाले पिसाब खुल्छ ।

ससाना बालबालिकाहरूलाई बराबर रुघाखोकीले सताइरहन्छ । यस्तोमा उनीहरूलाई तुलसीको रस, मह र मनतातो पानी मिलाएर दुई चम्चादेखि चार चम्चाका दरले दिनमा दुई-तीन पटक खुवाउनाले सञ्चो हुन्छ । रुघा र पिनास रोग लागेमा निको पार्न तुलसीको रस मिसाएको पानीले नाक सफा गर्नुपर्छ । तुलसीको पात पिसेर बनाएको लेदोले अनुहार वा सम्पूर्ण शरीरमा मालिस गर्नाले छालाको रोग निको हुन्छ एवम् चमक पनि आउँछ ।

तुलसीको मिश्रण भएका सयौँ औषधिहरू पाइन्छन् । तर ताजा तुलसी नै सबभन्दा लाभदायक हुन्छ । दैनिक चार वटादेखि पाँच वटामात्र पात मुखमा राखेर चुस्ने हो भने पनि कैयन रोगबाट बच्न सकिन्छ ।

तुलसीको सुगन्धले मन शान्त हुन्छ । यसको वरिपरिको हावा प्राणवायुयुक्त हुन्छ । तुलसीको बोट भएका ठाउँमा शरीरलाई हानि गर्ने किटाणुहरू बस्न सक्दैनन् । घरवरिपरि तुलसी रोप्नाले घरको वातावरण राम्रो हुन्छ ।

तुलसीको महत्त्वलाई बुझी यसलाई जताततै रोपौँ । तुलसीको प्रयोग गरी स्वास्थ्य र सुन्दरता बढाऔँ ।

जय गुरुदेव !

# शुभकार्यको शुभारम्भ शुभमुहूर्तमा

*वराहमिहिरले शताब्दियौं पूर्व कालगणना गरेर यो कुरा सिद्ध गरेका थिए कि प्रत्येक दिन मानिसको शुभ र अशुभ दुवै प्रकारका समय आउँछन् र कालज्ञानअनुसार शुभ समयमा कार्य गरेमा निश्चय नै कार्यमा सफलता प्राप्त हुन्छ । यद्यपि ज्योतिषमा दिशासूल, योगिनी, चन्द्रमा आदिको उल्लेख छ र यो पनि बताइएको छ कि यी सबै कुराहरूलाई ध्यानमा राखेर नै शुभकार्य प्रारम्भ गर्नु पर्दछ । तर मिहिराचार्यले बताएका छन् कि यदि हामीलाई कालज्ञान छ भने यी कुराहरूलाई ध्यानमा राख्नु आवश्यक छैन किनकि यो क्षण आफैँमा अत्यन्त महत्त्वपूर्ण छ । यसैले यसमा व्यतिपात, दिशासूल आदिको अशुभ प्रभाव पर्दैन । यात्रा, विवाह, भेटघाटलगायतका कुनै पनि शुभकार्य प्रारम्भ गर्दा कालज्ञानअनुसार गरिएमा ती कार्यहरू सफल हुन्छन् नै, मिहिराचार्य भन्दछन् ।*

*प्रस्तुत शुभ समयहरू (सर्वश्रेष्ठ तथा श्रेष्ठ) परमपूज्य सद्गुरुदेव डा. नारायणदत्त श्रीमालीद्वारा रचित 'ज्योतिष और काल निर्णय' ग्रन्थमा आधारित रहेर तयार पारिएको हो ।*

**२०६८ जेठ १, ८, १५, २२ र २९ गते आइतबार**

सर्वश्रेष्ठ– दिन ३:३६–४:२४, रात्रि ४:२४–६:००

श्रेष्ठ– दिन ६:००–८:२४, ११:३६–२:४८

रात्रि ६:४८–१०:००, १२:२४–२:४८

**२०६८ जेठ २, ९, १६, २३ र ३० गते सोमबार**

सर्वश्रेष्ठ– रात्रि २:४८–३:३६

श्रेष्ठ– दिन ६:००–७:२४, ९:१२–११:३६ रात्रि ८:२४–११:३६

**२०६८ जेठ ३, १०, १७, २४ र ३१ गते मंगलबार**

सर्वश्रेष्ठ– रात्रि ५:१२–६:००

श्रेष्ठ– दिन १०:००–११:३६, ४:३६–६:००,

रात्रि ६:४८–१०:००, १२:२४–२:४८

**२०६८ जेठ ४, ११, १८ र २५ गते बुधबार**

सर्वश्रेष्ठ– दिन ६:४८–८:२४

श्रेष्ठ– दिन ८:२४–१०:००, २:४८–५:१२

रात्रि ७:३६–९:१२, १२:२४–२:४८

**२०६८ जेठ ५, १२, १९ र २६ गते बिहीबार**

श्रेष्ठ– दिन ६:००–७:३६, १०:००–११:३६, ४:२४–६:००

रात्रि ९:१२–११:३६, २:००–४:२४

**२०६८ जेठ ६, १३, २० र २७ गते शुक्रबार**

सर्वश्रेष्ठ– रात्रि १०:२८–११:३६

श्रेष्ठ– दिन ६:००–६:४८, ७:३६–१०:००, १२:२४–३:३६

रात्रि ७:३६–९:१२, १:१२–२:४८

**२०६८ जेठ ७, १४, २१ र २८ गते शनिबार**

सर्वश्रेष्ठ– दिन ६:००–६:४८, रात्रि ८:२४–९:१२

श्रेष्ठ– दिन १०:३६–१२:२४

रात्रि ९:१२–१०:४८, २:४८–३:३६, ५:१२–६:००

*नोटः दिन भन्नाले बिहान ६:०० देखि साँझ ६:०० सम्म*
*रात्रि भन्नाले साँझ ६:०० देखि अर्को बिहान ६:०० सम्म*

## हवन कार्यक्रम

सिद्धाश्रम शक्ति केन्द्रबाट हरेक महिना सम्पन्न हुँदै आइरहेका मासिक कार्यक्रमअन्तर्गत हवन कार्यक्रमहरू गत महिना निम्नानुसार सम्पन्न भए–

वैशाख ५ गते सोमबार– श्री शिव गोरक्ष हवन, गोरखनाथ मन्दिर, पशुपति, मृगस्थली, बिहान ८:००-९:०० बजे । वैशाख ६ गते मंगलबार– तान्त्रोक्त वटुक भैरव हवन, वटुक भैरव मन्दिर, लगनखेल, बिहान ७:००-८:०० बजे । वैशाख ७ गते बुधबार– तान्त्रोक्त महालक्ष्मी हवन, महालक्ष्मी मन्दिर, लगनखेल, बिहान ८:००-९:०० बजे । वैशाख १ गते बिहीबार– तान्त्रोक्त वगलामुखी हवन, वगलामुखी मन्दिर, पाटन, बिहान ८:००-९:०० बजे । त्यस्तै मासिक हवनकै क्रममा वैशाख ७ गते बुधबार– तान्त्रोक्त विन्ध्यवासिनी हवन, विन्ध्यवासिनी मन्दिर, पोखरा, कास्की, बिहान ८:००-९:०० बजे, वैशाख १ गते बिहीबार– तान्त्रोक्त वेदव्यास हवन, वेदव्यास गुफा, तनहुँ, बिहान ८:००-९:०० बजे, वैशाख ६ गते मंगलबार– तान्त्रोक्त गणपति हवन, सूर्यविनायक, भक्तपुर, बिहान ७:००-८:०० बजे, वैशाख ६ गते मंगलबार– तान्त्रोक्त चण्डेश्वरी हवन, चण्डेश्वरी मन्दिर, काभ्रे, बिहान ७:००-८:०० बजे सम्पन्न भयो ।

## आरती संचालन केन्द्रहरूको अवलोकन भ्रमण

सिद्धाश्रम शक्ति केन्द्रअन्तर्गत उपत्यकाका विभिन्न ठाउँमा रहेका आरती संचालन केन्द्र र कन्ट्याक्ट प्वाइन्टहरूको अवलोकन भ्रमण हालै सम्पन्न भयो । आरती संचालन केन्द्र मच्छेगाउँ, बाघभैरव कीर्तिपुर, सानोभर्‍याङ, नयाँबजार, विशालनगर, सिनामंगल, पुतलीसडक आदिलगायतका आरती संचालन केन्द्र र कन्ट्याक्ट प्वाइन्टहरूको अवलोकन भ्रमणमा समसामयिक विषयमा कुराकानी हुनाका साथै रोट महोत्सवका बारेमा जानकारी गराइएको थियो ।

यस क्रममा गोरक्ष निखिल वाणी पत्रिकालाई जन जनमा कसरी पुर्‍याउन सकिन्छ भन्ने सम्बन्धमा पनि विचारविमर्श गरिएको थियो । पत्रिकाको अध्ययनबाट मानिसमा आउने सकारात्मक सोच र आध्यात्मिक तथा भौतिकरूपमा हुने उन्नति प्रगतिका लागि सबैले पत्रिकाको ग्राहक बनाउने गुरुकार्यमा नयाँ जोश र जाँगरका साथ खट्नुपर्ने आवश्यकतामाथि पनि उक्त अवसरमा जोड दिइएको थियो ।

अवलोकन भ्रमणमा सावरपन्थी सदस्य रामजी अर्याल, सावरमातृका विन्देश्वरी बराललगायत गुरुसेवा दलका सदस्यहरूको पनि सहभागिता रहेको थियो । अवलोकन भ्रमणमा गोरख गुफाका प्रमुख पुजारी प्रदिपनाथ योगीज्यू पनि कतिपय ठाउँमा सहभागी हुनुभएको थियो । यसैबीच भ्रमण टोलीले विभिन्न सम्पर्क कार्यालयहरूको पनि अवलोकन गरेको थियो ।

## आध्यात्मिक सहनेतृत्वकर्ताहरूका लागि तालिम तथा प्रशिक्षण

सिद्धाश्रम शक्ति केन्द्रको मासिक कार्यक्रमअन्तर्गतको तालिम तथा प्रशिक्षण कार्यक्रममा गत वैशाख ३१ गते सहनेतृत्व तहको तालिम तथा प्रशिक्षण कार्यक्रम सम्पन्न भयो । गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा सम्पन्न उक्त तालिम तथा प्रशिक्षण कार्यक्रममा उपत्यकालगायत विभिन्न जिल्लाबाट गुरु सेवकसेविका कार्यकताहरू सहभागी हुनुहुन्थ्यो ।

बिहान ९:०० बजेबाट स्तुतिवन्दनाबाट शुरु भएको उक्त तालिम तथा प्रशिक्षण कार्यक्रममा विभिन्न विषयमा प्रशिक्षार्थीहरूलाई जानकारी गराइएको थियो । कार्यक्रममा भजनकीर्तनलगायतका कार्यक्रमहरू पनि सम्पन्न भएका थिए ।

## नयाँबजारको चौथो वार्षिकोत्सव

सिद्धाश्रम शक्ति केन्द्र आरती संचालन केन्द्र नयाँबजारले आफ्नो चौथो वार्षिकोत्सव मनाएको छ । गत वैशाख १९ गते परमपूज्य सद्गुरुदेवहरूको स्तुतिवन्दनाबाट शुभारम्भ भएको उक्त कार्यक्रम साँझसम्म चलेको थियो । कार्यक्रममा भजनकीर्तनलगायत नृत्यहरू पनि प्रस्तुत गरिएका थिए ।

# शुभकामना आदान प्रदान कार्यक्रम

'हाम्रो आध्यात्मिक जीवन अगाडि बढोस्, सद्गुरुको सामीप्यता प्राप्त होस्', सिद्धाश्रम शक्ति केन्द्र गुरुसेवा दलका सदस्य ज्ञानु रेग्मीले नयाँ वर्ष २०६८ सालको शुभकामना आदान प्रदान कार्यक्रममा स्वागतमन्तव्य दिने क्रममा यस्तो उद्गार व्यक्त गर्नुभयो ।

गत वैशाख ३ गते गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रममा स्तुतिवन्दना, प्रार्थनाबाट शुरु भएको उक्त कार्यक्रम औपचारिकताभन्दा पनि आत्मीयतामा सम्पन्न भएको थियो । कार्यक्रमलाई अनौपचारिक बनाउने क्रममा विभिन्न खेलहरु पनि खेलाइएको थियो । कार्यक्रममा 'जय गुरुदेव खेल'ले विशेष आकर्षण दिएको थियो । यस खेलमा ३० सेकेन्डको निर्धारित समयमा सबैभन्दा बढी 'जय गुरुदेव' भन्नेलाई पहिलो पुरस्कारको व्यवस्था गरिएको थियो । प्रतियोगितामा साधिका सीता कार्कीले निर्धारित समयमा ६५ पटक र साधक माधव वस्नेतले ६० पटक 'जय गुरुदेव' भनेर क्रमशः प्रथम र द्वितीय पुरस्कार प्राप्त गर्नुभएको थियो ।

कार्यक्रममा अर्को आकर्षक खेल 'प्रश्नोत्तर' खेल थियो । उक्त खेलमा सबैभन्दा बढी प्रश्नको जवाफ दिएर साधक सालिग्राम सिलवालले प्रथम पुरस्कार हात पार्नुभयो भने डिना प्रजापतिले द्वितीय पुरस्कार जित्नुभएको थियो ।

कार्यक्रमको तेस्रो खेल 'सांगीतिक प्रस्तुति'मा साधक लोकबहादुर नेपालीले सबैभन्दा निकृष्ट गाएर र सबैभन्दा निकृष्ट बजाएर शिवरामजीले पुरस्कार हात पार्नुभएको थियो ।

सावरपन्थी साधक रामजी अर्यालले शुभकामना व्यक्त गर्नुहुँदै हाम्रो जीवन हामीहरुको हातमा नभई परमपूज्य सद्गुरुदेवहरुको हातमा रहेको र साधकत्व र शिष्यत्वको विकास नभएसम्म हामीले केही पनि गर्न नसक्ने बताउनुभयो । उहाँले नयाँ वर्षलाई साधकत्व र शिष्यत्वको विकासमा लगाउनु पर्ने आवश्यकतामाथि जोड दिनुहुँदै २०६७ सालमा भएका कमी कमजोरीलाई हटाएर नयाँ वर्ष २०६८ साललाई समुन्नत गर्नुपर्नेमा जोड दिनुभयो ।

उहाँले भन्नुभएको थियो, 'हाम्रो लागि सबैभन्दा ठूलो पुरस्कार भनेको गुरुको दृष्टिमा राम्रो हुनु हो, गुरुको लागि खट्नु आफ्नै लागि खट्नु हो ।'

गत वर्षको माघमा सम्पन्न शिविर र अभिनन्दन समारोहको सफलता र यससम्बन्धी होली पूर्णिमा शिविर ताका जोधपुरमा चलेको प्रशंसालाई पनि उहाँले कार्यक्रममा संस्मरण गर्नुभएको थियो ।

कार्यक्रममा सावरमातृका विन्देश्वरी बरालले शुभकामना व्यक्त गर्नुहुँदै संस्थाको स्वर्णिम क्षण छिटोभन्दा छिटो आओस् भन्ने कामना गर्नुभयो । उहाँले संस्था र गोरक्ष निखिल वाणीलाई नयाँ रुपमा लानुपर्ने आवश्यकतामाथि जोड दिँदै पत्रिकालाई बढीभन्दा बढी मानिसहरुमा लानका लागि योजनाहरुलगायत पत्रिकाका लागि छुट्टै टिमको व्यवस्था भएको पनि बताउनु भयो । उहाँले अनुशासनको पालनाबाटै सबैतिर उन्नति प्रगति हुने बताउनु हुँदै सबैले दिगो अनुशासनलाई पालना गर्नुपर्ने आवश्यकतामाथि जोड दिनुहुँदै विभाग, उपविभागको सक्रियता बढ्ने क्रममा रहेको बताउनुभयो ।

कार्यक्रममा गुरुसेवा दल सदस्य हरि भट्टराईले नयाँ वर्षको शुभकामना व्यक्त गर्नुहुँदै सम्पन्न हुने कार्यक्रमको कार्य-बाँडफाँडको सूचिलाई पढेर सुनाउनुभएको थियो ।

कार्यक्रममा साधिका डालिमा मिजारले 'गोरक्ष निखिल आऊ' कविता वाचन गर्नुभएको थियो । सिद्धाश्रम शक्ति केन्द्रले हालै भक्तपुरको लोकन्थलीमा सात रोपनी जग्गा प्राप्त गरेको र हाल त्यहाँ निर्माण कार्य सम्पन्न भइरहेको जानकारी पनि गराइएको थियो । खचाखच भरिएको आरती कक्षमा परिचयको क्रम पनि राखिएको थियो । उक्त कार्यक्रममा जोधपुरबाट ल्याइएको होली पूर्णिमाको फूलटीका पनि वितरण गरिएको थियो ।

---

# विद्याश्रम सात वर्षमा पदार्पण

परमपूज्य सद्गुरुदेवद्वय श्री श्री महयोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको कृपा, अनुकम्पास्वरूप संचालित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमले आफ्नो विकास तथा विस्तारको कार्यलाई अगाडि बढाइरहेको छ । विद्याश्रमको नियमित कक्षा संचालन गत वैशाख ४ गतेदेखि शुरु भएको छ । साथै विद्याश्रमले गत वैशाख ५ गते आफ्नो स्थापनाको छैटौं वर्ष पूरा गरेर सातौं वर्षमा प्रवेश गरेको उपलक्ष्यमा विद्याश्रम प्राङ्गणमा एक कार्यक्रमको आयोजना गरेको थियो । उक्त अवसरमा सातौं वार्षिकोत्सवको हरेक पक्षमा ७ अंकलाई विशेष जोड दिइएको थियो । कार्यक्रमको शुभारम्भमा विद्याश्रमका ७ जना शिक्षक शिक्षिकाले गुरु पूजन गर्ने शौभाग्य प्राप्त गर्नुभएको थियो । गुरु पूजनकै क्रममा सद्गुरुदेवहरूलाई ७ किसिमका पकवान, ७ किसिमका फूल चढाउनुका साथै ७ वटा दीयो बालिएको थियो । साथै पूजनको क्रममा परमपूज्य सद्गुरुदेवहरूको पादुकामा ७ वटा दक्षिणा चढाइएको थियो भने स्थापनाकालदेखि हालसम्म अध्ययनरत ७ जना विद्यार्थीलाई विशेष प्रसाद तथा उपहार प्रदान गरिएको थियो ।

उक्त अवसरमा श्री विष्णुदत्त पाण्डेलाई विद्याश्रमको प्रिन्सिपलको रूपमा नवनियुक्ति दिइएको थियो । सिद्धाश्रम शक्ति केन्द्रका संयोजक एवं सावरपन्थी सदस्य श्री रामजी अर्यालजीले उहाँलाई फूलमाला तथा गुरु प्रसाद दिएर स्वागत गर्नुभएको थियो ।

गुरु र शिष्यको सम्बन्धलाई सबैभन्दा निस्वार्थ सम्बन्ध मानिन्छ। संसारको हरेक सम्बन्ध स्वार्थमा आधारित हुन्छ। हरेक मायाको पछाडि कुनै न कुनै स्वार्थ लुकेको हुन्छ। तर गुरुको शिष्यप्रतिको प्रेममा कुनै स्वार्थ लुकेको हुँदैन। गुरुले शिष्यबाट पाउनु पर्ने कुरा पनि केही हुँदैन। तसर्थ गुरु त केवल प्रदाता हुनुहुन्छ। उहाँ कुनै न कुनै रुपमा शिष्यलाई प्रदान गरिरहनु हुन्छ र शिष्यले निरन्तररुपमा गुरुबाट प्राप्त गरिरहन्छ। तसर्थ जब व्यक्तिले गुरु प्राप्त गर्दछ सम्पूर्णको प्राप्ति गर्दछ। यसर्थ जब व्यक्तिले गुरु प्राप्त गर्दछ त्यो क्षण उसको जीवनको सर्वाधिक सौभाग्यको क्षण भनिन्छ।

सम्पूर्ण विश्वब्रह्माण्ड गुरु अझै भनौं भने सद्गुरुद्वारा चलायमान छ। उहाँको कृपाले नै जीवले जीवन पाउँदछ, प्रत्येक श्वास पाउँदछ। साँच्चै भन्ने हो भने मनुष्यजीवन नै सद्गुरुदेवको सुन्दर उपहार हो। सद्गुरुदेवबाट जब मनुष्यले यति धेरै कुरा प्राप्त गर्दछ भने उहाँप्रति कृतज्ञ बन्नु पनि उसको परम कर्तव्य बन्दछ। तर दुःखको कुरा यो छ कि मानवजीवनमा यो चेतनाको आभिर्भाव नै हुँदैन। सामान्य स्थितिमा जीवन यत्तिकै बित्दछ भौतिक प्रपञ्चहरुमा हराउँदा हराउँदै। मनुष्यमा यो चेतनाको उदय तब मात्र हुन्छ जब ऊ सद्गुरुदेवको शरणमा पुग्दछ।

तब मात्र मनुष्यले आफ्नो जीवनको औचित्य र मर्म बुझ्दछ। तब मात्र मनुष्यले सद्गुरुदेवको आफूमाथिको ऋण चुकाउने प्रयत्न गर्दछ। यसको लागि उसले अनेकौं कर्महरु गर्न कोशिस गर्दछ। यिनै कोशिसहरुमध्ये 'रोट' अर्पण पनि एउटा उत्कृष्ट कोशिस हो। रोट सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथको अति प्रिय वस्तु हो। आफ्ना सद्गुरुदेवको प्रिय वस्तु उहाँलाई अर्पण गर्नु उहाँप्रतिको आफ्नो अपार श्रद्धा, भक्ति अर्पण गर्ने र आफ्नो उहाँमाथिको ऋणबाट उऋण हुने एउटा प्रयास हो।

सिद्धाश्रम शक्ति केन्द्र नेपालले विगत सात वर्षदेखि सवालाख रोट अर्पण कार्यक्रम आयोजना गरेर सद्गुरुदेवको चरणकमलमा भावभक्ति अर्पण गर्ने कोशिस गरिरहेछ। यो एउटा यस्तो महान् अनुष्ठान हो जसमा हर कोही व्यक्ति सहभागी हुन सक्दछ र हर कोही व्यक्तिले सद्गुरुदेवप्रतिको आफ्नो भावभक्ति अर्पण गर्न सक्दछ र उहाँको कृपा, आशीर्वाद प्राप्त गर्न सक्दछ। सद्गुरुदेवको अस्तित्व, उहाँसँगको आफ्नो सम्बन्ध, उहाँप्रतिको आफ्नो कर्तव्यलाई बिर्सिरहेको आजको समाजमा यो महाअनुष्ठान एउटा यस्तो दिव्यतम् अवसर हो जसमा सहभागी भएर हरेक व्यक्तिले एउटा असामान्य र अति दुर्लभ महान् कार्य गर्न सक्दछ।

कुनै व्यक्त वा व्यक्तिको समूह मात्रले यस्तो महाअनुष्ठान गर्न दुष्कर छ। सिद्धाश्रम शक्ति केन्द्रले सवालाख रोट अर्पण कार्यक्रम आयोजना गरेर लाखौंलाख मानिसहरुलाई एउटा उच्चतम् सौभाग्य प्राप्तिको सुअवसर प्रदान गरिरहेको छ र एउटा अत्यन्त ठूलो लोककल्याणकारी महाअनुष्ठानमा सहभागी हुने मौका दिइरहेको छ। अस्तु।

पोखरा रामघाटमा कार्यकर्ता भेटघाट

भक्तपुरको सिरुटारमा सम्पन्न कार्यक्रम

काठमाडौंको मच्छेगाउँमा कार्यकर्ता भेटघाट

काठमाडौंको नरदेवीमा कार्यकर्ता भेटघाट

भक्तपुरमा सम्पन्न प्रचारात्मक कार्यक्रम

काठमाडौंको सिमलटारमा कार्यकर्ता भेटघाट

आध्यात्मिक सहनेतृत्वकर्ताहरूको तालिम तथा प्रशिक्षण

आध्यात्मिक सहनेतृत्वकर्ताहरूको तालिम तथा प्रशिक्षण

गो.हु.का.द.नं. ६२/०६७/६८ का.जि.द.नं. ७०/०५६

जय गुरूदेव !

# हार्दिक आमन्त्रण

पूजनीय गुरूमाता भगवती देवी श्रीमाली तथा गुरूदेव अरविन्दज्यूको समुपस्थितिमा

सम्पर्कः

**सिद्धाश्रम शक्ति केन्द्र नेपाल**

बसुन्धरा, काठमाडौं, । फोनः ०१-२१००१५३